# केही कुराहरु....

हजरत अबु हुरैरह रदि अल्लाहु अन्हु बाट वर्णन गरिएको छ कि नबि ए करिम सल्लल्लाहु अलैहि वसल्लम ले भन्नुभयो :

"जब अल्लाह पाकले कुनै बन्दालाई आफ्नो प्रेमीको स्थानमा राख्नु हुन्छ..... तब जिबरिल अलैहीस सलामलाई भन्नू हुन्छ..... निःशन्देह अल्लाह फलानो व्यक्तीलाई माया गर्नु हुन्छ, तिमीहरु पनि त्यो व्यक्तीलाई माया गर्ने गर.... तब हजरत जिबरइल अमिन अलैहिस सलाम आकाश वालामा घोषणा गर्नु हुन्छ कि.... अल्लाह फलानो व्यक्तीलाई माया गर्नुहुन्छ तिमिहरु पनि त्यो व्यक्तीलाई माया गर्ने गर ...... तसर्थ आकाश वालाहरु पनि त्यो व्यक्तीलाई माया गर्न थाल्छन्... फेरि पृथ्वी वासीहरुको मनमा उस्को माया राख्दिने गरिन्छ।" (सहिह बुखारी भाग १ पा ४५६)

अब यो सोचमा न रह्नुस कि हरेक जस्ले इज्जत र प्रतिष्ठा पाउछ त्यो अल्लाह कै तर्फ बाट हो। यस्तो कदापी हैन। अल्लाह तआलाले भन्नू हुन्छ : "निःशन्देह त्यो व्यक्तीहरु जस्ले इमान लिएर आए र राम्रा अमल गरे, अल्लाह उनिहरुलाई महबुबियतको स्थानमा राख्नु हुनेछा" (कुरआन १९/९६)

अर्थात त्यो प्रतिष्ठा केवल ती व्यक्तित्वहरुले पाउँछन् जस्ले आफुलाइ इमान र राम्रो कार्य(अमल) बाट भरिपुर्ण गरेका हुन्छन्। अब यदि नेपालको भुमीमा निष्ठा पुर्ण रुपमा हेरिने हो भने त्यो खुबी र प्रतिष्ठा भएको व्यक्तीत्व हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहमा देखिन्थ्यो। वहाँ जहाँ जान्थे त्यहा आशिके मुस्तफा सल्लल्लाहु अलैही वसल्लम को भिड देखिन्थ्यो। वहाँको हजारौ मुरिद, विद्यार्थी, चाह्मे वाला थिए तर फर्ज र वाजिब त परै जाओस् कहिले सुन्नत र नफिल सम्म छोढेका देखिएनन्। अल्लाह पाक मुर्शिदे पाकको दरजातमा बुलन्दी अता गरून्! आमिन

✍... साजिद अहमद बरकाती

**पुस्तकको नाम** : "हजरत शेर ए नेपालको जिवनी र योगदान"

**संकलक** : साजिद अहमद बरकाती

**प्रथम संस्करण** : २०७७ असोज

**प्रकाशित** : ११०० प्रति

**मूल्य** : निःशुल्क (प्रथम प्रकाशन)

© **सर्वाधिकार** : संकलक कहाँ सुरक्षित

म यस किताबको सवाब ईश्क व मुहब्बतका इमाम , चौधवौ सदि हिजरीका मुजद्दीद , समयका सबै भन्दा ठुला बिद्वान, सम्पुर्ण आलिमले आफ्ना टाउकामा सजाएका ताज, ज्ञान र हिकमतले आफ्नो मुटु भरेका हाम्रा र सबैका इमाम आला हजरत इमाम अहमद रजा खाँ बरेल्वी रहमतुल्लाह अलैह

ताजदारे एह्ले सुन्नत, आलाहजरतका ज्ञान, हुजुर मुफ्ती ए आजम ए आलमका तक्वा, हुज्जतुल इस्लामका सुन्दरताका बेमिसाल झलक हुजुर ताजुश् शरीअह अल्लामा मुफ्ती अख्तर रजा खाँ अलैहिर रह्मा

प्रिय गुरु, मेरा पिर, मुर्शिद ए बा कमाल, मेरा मनको संसार बद्लीदिने विद्वान, नेपालको हर भुमिमा राज हुने सम्राट, नेपालका सबै भन्दा ठुला आलिम, मुफ्ती ए आजम ए नेपाल, शेरे नेपाल मुफ्ति जैश मुहम्मद सिद्दिकी रह्मतुल्लाह अलैह । र मेरा खानदानमा इन्तेकाल हुने सम्पुर्ण मर्हुमको रुहलाई इसाले सवाब गर्दछु।

## विषयसुची :

## विषयसुची :

# हार्दिक शुभकामना र दुआइ शब्दहरू

*नहमदहु व नुसल्ली अला रसुलेहिल करिम व आलिही व असाबिही अज्मइन अम्मा बअद !*

नेपाली भाषामा ज्ञान र शिक्षा का महासागर, मेरा आदरणीय बुवा हजरत मुफ्ती ए आजमे नेपाल, शेर ए नेपाल रह्मतुल्लाह अलैहको जिवनी बारे हजरत मौलाना साजिद अहमद बरकाती नेपाली द्वारा लेखिएको किताब “हजरत शेर ए नेपालको जिवनी र योगदान” इन शा अल्लाह निकै उत्कृष्ट र मकबुल साबित हुनेछ । मेरो सानो सल्लाह रहेको छ कि मौलाना साजिद बरकातीले यसरी नै अरु किताबहरु नेपाली भाषामा लेखिराख्नु होला जस्ले गर्दा नेपालका मुस्लिमहरु सहि तरिका र अह्ले सुन्नतको सहि बाटो सजिलै जान्न सकुन् र साथै आफ्नो इमान र इस्लामको रक्षा पनि सहि तरिकाले गर्न सकुन् । अल्लाह तआला वहाँलाई अझ दीन र सुन्नीयतको कार्य गर्ने तौफिक प्रदान गरून् साथै मौलाना साजिद अहमद बरकातीको यो प्रयत्न र कोसिसलाई आफ्नो दरबारमा कुबुल गरून् । आमिन

*जानशिन व शहजादए हजरत शेर ए नेपाल*

*अल्लामा जियाउल मुस्तफा सिद्दिकी बरकाती*

*साहिबे सज्जादा खानकाहे बरकात, लोह्ना शरिफ*

# हार्दिक शुभकामना र दुआइ शब्दहरु

*नह्मदहु व नुसल्ली अला रसुलेहिल करिम !*

फैज र बरकतका सागर, ज्ञान र प्रतिष्ठा भरिपुर्ण भएका व्यक्तित्व, मुफ्ती ए आजमे नेपाल हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको जिवनकाल बारेमा विभिन्न व्यक्तिले कलम उठाए र आफ्ना हिम्मत र मनोबलको हिसाबले किताबहरु, लेखहरु लेखे र लेख्न आवश्यक पनि छ । हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको व्यक्तित्व सुर्य र चन्द्रमाको प्रकाश झै फैलिएको छ । वहाँ कामिल मुफ्ती, बेमिषाल मुनाजिर र खतिब, बेनजिर मुहद्दिस थिए । वहाँको बानि र तरिका शरीअत र तरिकत अनुसार रह्यो त्यसैले त बरकातीयतको पहिचान, आलाहजरतको तलवारको धार र अडिगताका हिमाल बनेका थिए । हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह यस्ता व्यक्ति थिए जस्ले आफ्नो ज्ञानको प्रकाशले नेपाल र भारतका हजारौ क्षेत्रका मुस्लिमहरुलाई सत्य र असल मार्ग हिडाउन सफल भएका थिए । जस्को रुहानी फैजले हजारौ अल्लाहको बन्दाहरुको मुर्झाएको मुटु फेरि उम्रिन थालेको थियो । जस्को मनको दुआले अल्लाहका नेक बन्दाहरुको बिग्रिएको भाग्य चम्काउनका साथै दुःखी मानिसलाई सुखी र सम्पन्न सम्म बनाए । जुन दरबारमा अमल नगर्ने आउदा अमल गर्ने बनेर हिड्यो, बिरामी व्यक्ति आउदा सेहत पाएर फर्कियो । हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह यस्ता शिक्षक थिए जस्को हजारौ विद्यार्थीहरु देश बिदेशमा मस्लके आला हजरतलाई फैलाउनका साथ साथै नबि ए करिम सल्लल्लाहु अलैही वसल्लमको प्रेम बाट्न र औलिया ए किरामका सन्देश बाट्न बिहानसाझ खटिएका छन् ।

अतः शेर ए नेपाल रह्मतुल्लाह अलैह सम्पुर्ण खुबीहरु समाएका व्यक्तिको उपनाम हो । वहाँको कबर माथी सदैव रहमतको वर्षा भइ राखोस् । मेरा प्यारा मौलाना साजिद अहमद बरकाती नारायणघाट निकै मुबारकबाद र स्विकारिनु योग्य छन् कि वहाँले आफ्नो मातृभाषा नेपाली मा हजरत मुफ्ती ए आजमे

नेपालको जिवनी बारे किताब लेख्ने स्वभाग्य प्राप्त गर्नु भयो । अल्लाह पाक मौलाना साजिद अहमद बरकातीलाई यस्को अजर दिउन् र दिन र सुन्नीयतको कार्य गर्ने अझ हिम्मत र ताकत प्रदान गरुन् साथै किताबलाई आफ्नो दरबारमा मक्बुल बनाउन् । आमिन

खलिफ ए ताजुश्शरीअह व शेर ए नेपाल

मुफ्ती मुजिबुर रह्मान

निर्माणकर्ता जामिअतुल बरकात

३ जिलकाइदा १४४१ हिजरी

# हार्दिक शुभकामना र दुआइ शब्दहरू

*अल्हम्दोलिल्लाही रब्बिल आलमिन । अस्सलातु वस्सलामु अला सैयदिल अंबियाइ वल मुर्सीलिन । अम्मा बअद !*

अल्लाह तआलाको लाखौ लाख शुक्र र एहसान कि आज मैले आफ्नो पिर व मुर्शिद हजरत शेर ए नेपाल रहमतुल्लाह अलैहको जिवनी र योगदान बारे नेपाली भाषामा पढ्ने मौका पाए। यो मौका प्राप्त गरेको हुनाले म आफूले आफूलाई निकै भाग्यमानी ठानी रहेको छु साथै म धेरै धेरै धन्यवाद व्यक्त गर्न चाहन्छु यस किताबका संकलक भाइ साजिद अहमद बरकातीलाई जस्ले यो किताब " हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको जिवनी र योगदान " नेपाली भाषामा लेख्नु भएर सारै सराहनीय कार्य गर्नु भएको छ। हामिलाई थाहा भएको कुरा हो नेपालमा पिर व मुर्शिद हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई नचिन्ने सायद नै कोइ होलान्। हजरत शेर ए नेपाल त्यो व्यक्ति हुन् जस्ले आफ्नो जिन्दगी मस्लके आला हजरतको रक्षा गर्नको लागि व्यतित गर्नु भयो। यो वहाँको मेहनत कै फल हो कि आज हामि पहाडमा पनि मस्लके आला हजरतमा अडिगताका साथ आफ्नो इमान र अकिदालाई बचाउन सफल भएका छौ।

म अल्लाह तआलाको बारगाहमा दुआ गर्दछु कि अल्लाह तआला हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको दिनी र समाजि योगदानलाई कुबुल गरून् र हजरतको दरजातलाई बुलन्द गरुन् । साथ साथै यस किताबका संकलक भाइ साजिद अहमद बरकाती को यो मेहेनतलाई पनि कुबुल गरून् र आइन्दा दिनहरुमा पनि यसरी नै नेपाली भाषामा अरु किताब लेख्ने तौफिक अता फर्माउन। आमिन

*हाफिज काजी मियाँ*

*इमाम बरकातिया जामा मस्जिद*

*नारयणगढ, चितवन, नेपाल*

# हार्दिक शुभकामना र दुआइ शब्दहरू

*हामिदौं व मुसल्लियौं व बादः*

प्रिय भाई मुह्तरम साजिद अहमद बर्कातीको अमुल्य कोशिश "हजरत शेरे नेपाल को जीवनी र योगदान" नामी किताब पढेर निकै खुशी लाग्यो जो कि पिरे तरिकत् रह्बरे शरिअत मुफ्तिए आजम नेपाल सैयि्यदी मुर्शिदी हुजुर शेरे नेपालको मुबारक जीवनीमा निर्धारित छ।

मुर्शिदे गेरामी सैयि्यदी शेर ए नेपालको ब्याक्तित्व नेपाली समाजका लागि कुनै नौलो व्यक्तित्व होइन अल्लाह तआलाले उहाँलाई राष्ट्रिय तथा अन्तराष्ट्रिय तौरमा पहिचान प्रदान गरेको छ। उहाँ धर्म र धर्म ज्ञानमा रुची राख्नेहरुको गन्तब्य हुनुहुन्थ्यो। उहाँको ईल्म, अमल, फजिलत व कमाल अनि योगदान र सेवाहरु नेपालको हरेक व्यक्तिको मन मस्तिष्कमा सुनौलो अक्षरले कोरिएको छ। किनकि उहाँले नेपाली मुस्लिम समुदायलाई तिर्न नसक्ने गुण लगाउनु भएको छ। नेपालको सम्पूर्ण भूभाग हिमाल, पहाड, तराई, पुर्ब, पश्चिम, उत्तर, दक्षिणमा फैलिएर रहनु भएका मुस्लिम समुदायहरु सम्म समान तरिकाले मार्ग दर्शक धर्म गुरु पिरे तरिकत् रह्बरे शरिअत मुफ्तिए आजम नेपाल सैयि्यदी मुर्शिदी हुजुर शेरे नेपालको पहुच रहेको थियो र सबैलाई उहाँले आफ्नो अमुल्य धार्मिक शैक्षिक सेवाहरु प्रदान गर्नु भएको छ। सैयि्यदी मुर्शिदी हुजुर शेरे नेपाल एक घनिष्ट धर्मबिद्व भए संगै आफ्नो अमल र पर्हेज्गारीले सबैलाई आश्चर्य चकित पार्नु भएको थियो।

अल्लाह तआलाको फजल व करमले मेरो जीवनको अत्यन्त मुबारक र खुशगवार दिनहरु त्यहाँबाट शुरु भएका थिए जब देखि मैले आफ्नो प्राथमिक शिक्षा उनको काखबाट शुरु गरेको थिएँ सो दिनहरुमा दिन रात उहाँको सेवाको अवसर हासिल भयो। मेरो सौभाग्य यति सम्म थियो कि स्वदेशमा हुँदा मात्र

होइन विदेश (मिश्र, कतार) मा हुदा समेत उहाँको खिद्मतको अवसर प्राप्त भयो र उहाँको निकट रहेर उहाँको ईल्म व अमल प्रखने र उहाँको आदेश निर्देशहरु सुन्ने र सिक्ने मौका पनि पाएँ उनीकहाँबाट शैशिक यात्रा शुरु गरे देखि आज सम्म देश विदेशको विभिन्न यात्रा गरेर संसार भरिका दिग्गज मशाईख व ऊलमाए केरामहरु देखि प्रतयक्ष वा अप्रत्यक्ष शिक्षा प्राप्त गरें तर जो तक्वा, पर्हेज्गारी र मजहबे हक अहले सुन्नत वल जमाअतमा अटलता उहाँमा देखें अरु कसैमा देखिन ।

निशन्देह ! उहाँको पूर्ण जीवन शैली शरिअत् व तरिकत् अनि सुन्नते नबवी (सल्लल्लाहू अलैहे व सल्लम) को ऐन मुताबिक थियो ।

उहाँको जीवन शैलीलाई बिस्तृत रुपमा समुदाय सामु ल्याउनु जरुरि त थियो तर मुह्तरम भाई साजिद अहमद बर्कातीले सो कार्यमा सबैलाई उछिन्नु भएको छ । अल्लाह अज्ज व जल्लले मुह्तरम भाई साजिद अहमद बर्कातीको यस प्रयासलाई आफ्नो हबिब मुहम्मदुर रसुलुल्लाह (सल्लल्लाहू अलैहे व सल्लम) को सद्कामा मकबुल गरुन र उत्तर(उत्तर प्रगति प्रदान गरुन । आमिन ।।।

प

*मुफ्ती नबि बख्श बरकाती अज्हरी*

*गोरखा,नेपाल (हाल कतार)*

# हार्दिक शुभकामना र दुआइ शब्दहरू

*अल्हम्दोलिल्लाही रब्बिल आलमिन । अस्सलातु वस्सलामु अला सैयदिल अंबियाइ वल मुर्सलिन । अम्मा बअद !*

उल्लेखित किताब "हजरत शेर ए नेपालको जिवनी र योगदान" मनका प्यारा, औलिया र ओलमाका प्यारा मौलवी साजिद अहमद बरकाती नेपाली द्वारा लेखिएको हो । यस किताबका संकलक साजिद सल्लमहु ले किताबमा आफ्नो मातृभाषा नेपाली मा सैयदी , सनदी मुर्शिदे गिरामी, नेपाली मुस्लिमका शान र नेपाली मुस्लिमहरुका पहिचान शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकि अलैहिर रहमाको उत्कृष्ट जिवनी र शैक्षिक योगदान बारे खुलस्त रुपमा व्याख्या गर्नु भएर नेपाली मुस्लिमहरुको लागि एउटा उपहार प्रदान गर्नु भएको छ। यस किताब पढ्नाले हजरत शेर ए नेपालको पुर्ण जीवनको बारेमा खुलस्त रुपमा थाहा पाउन सक्छौ कि उहाँ रह्मतुल्लाह अलैहले कसरी आफ्नो पूरा जीवन दिन ए इस्लाम र मस्लके आलाहजरतको लागि व्यतित गर्नुभयो । हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले अल्लाह तआलाबाट प्रदान गरिएको शैक्षिक उपलब्धिलाई देश बिदेशका मुस्लिमहरु माझ साझा गरेर आफ्नो जिम्मेवारी पुर्ण रुपले पूरा गर्नु भयो । हुन त हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई हर एक ठाउँका मुस्लिमहरुको इमान र अकिदालाई सुधार्ने र बचाउने चिन्ता हुने गर्दथियो, तर खास गरि त्यो सोच आफ्नो देश र त्यहि माथि पनि पहाडी भुभागको चिन्ता हुनेगर्दथियो जस्को लागि उहाँ कहिले आफै आउने गर्दथिए र कहिले आफ्ना विद्यार्थीलाई पठाउँदथे । अल्हम्दोलिल्लाह ! हजरत शेर ए नेपाल कै मेहनत र योगदानले आज पूरा पहाडमा सुन्नीयत फैलिएको र बचेको छ । साथै धेरै जसो पहाडी मुस्लिमहरु हजरत कै मुरिद रहेको कुरा पनि हामीहरु खुलस्त रुपमा देख्ने गर्दछौ । त्यो पहाडि भुभाग जहाँ इस्लामी शिक्षा को निकै कमि थियो आज त्यही हजरत शेर ए नेपालको फैजानबाट हाफिज र ओलमाका यस्ता समुह तयार भएका छन् जस्ले हजरत

शेर ए नेपालको मिशनलाई समातेर अगाडि बढ्दै छन् । अल्लाह सुब्हान वतआला हजरत रह्मतुल्लाह अलैहको दिनी र समाजिक योगदानलाई कुबुल फर्माउन् र हजरतको दरजात र मर्तबामा निकै बुलन्दि अता गरुन् । अल्लाह तआलाको दरबारमा दुआ गर्दछु कि अल्लाह तआला किताबका संकलक मौल्वी साजिद अहमद बरकाती  को यो मेहनत आफ्नो पिरको प्रेम र मायामा गरेका हुन् त्यस्लाई कुबुल फर्माउन् र वहाँको ज्ञान र अमल, तक्वा र तहारतमा निकै बरकत अता गरुन् । आमिन

*खलिफ ए शेर ए नेपाल*

*मौलाना फिरोज आलम चमन बरकाती*

*खतिब व इमाम, गौषिया जामे मस्जिद*

*दुलेगौंडा, तनहुँ , नेपाल*

*२२ जुन २०२०, ८ गते असार वि.सं. २०७७*

## संकलकका कलमबाट !

*✍... साजिद अहमद बरकाती*

*आँखा उठाएर हेर, केही आवाज सुन्छौ,*

*बोली हजारौं भेट्छौ, कुरा हजार सुन्छौ !*

सम्पुर्ण प्रशंसा र इज्जत अल्लाह तुआलाका लागि हो । जो सम्पुर्ण संसार का पालनकर्ता हुन्, उहाँ बाहेक कोहि इबादत, पुजाको योग्य छैन। उहाँले सबैलाई दिनु हुन्छ तर कोहि संग केहि लिनुहुदैन। सबैलाई उहाँको आवश्यकता छ तर उहाँलाई कसैको आवश्यकता छैन । सबैको लागि मृत्यु निश्चित छ तर उहाँकोलागि छैन। उहाँ सधै थिए र सधै रहनुहुनेछ। अरबौ दुरुद, सलाम र अल्लाहको रहमत नाजिल होस उहाँ माथी जो सम्पुर्ण संसारको लागि रहमत (आशिर्वाद) बनेर अवतरित हुनुभयो। उहाँ नबि र रसुलहरुका आका, हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम हुन् जस्को चर्चारप्रशंसाबाट जमिन र आकाश भरिएको छ र उहाँको चर्चा हरेक कान सम्म पुगेको छ। दुरुद र सलाम उहाँको सन्तान, सहाबा र साथिहरु माथि जो अल्लाह तआलाको फौजका सिपाहि हुन् र हरेक इस्लामी समूह र समुदायका सरदार हुन् ।

प्रस्तुत किताब “हजरत शेर ए नेपाल को जीवनी र योगदान” एउटा जिज्ञासाबाट शुरु भएको थियो कि हामीले शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई कुन रुपले हेर्छौ ? किन वहाँलाई शेर ए नेपाल भनिन्छ ? वहाँ कस्ता आलिम थिए ? हाम्रा लागि वहाँको योगदान के थिए ? वहाँ ले जीवनकालमा कति किताब लेखे ? कति उपाधी र उपनाम पाए ? कति हज गरे ? सायद यहि एउटा जिज्ञासा थियो जस्ले मलाई यो किताब लेख्न रुचि दिलायो । यो किताब संकलन गरिएको हो खलिफ ए हुजुर मुहद्दिषे कबिर व हुजुर शेर ए नेपाल मुफ्ती अब्दुस सलामको किताब (तज्ल्लियाते मुहद्दिषे आजम ए नेपाल)

र नाएबे हुजुर शेर ए नेपाल मुफ्ति अहमद हुसैन बरकाती साहबको किताब (मुफ्ती ए आजमे नेपाल गौषा ए हयात व खिदमात)बाट ।

सबै भन्दा पहिला म धन्यवाद व्यक्त गर्दछु मेरा आदरणीय हजुरबुवा, मेरा आमाबुवा, काकाकाकी, मामामाइजू र दाजुभाइलाई जस्ले किताबको रचनामा मेरो मन र दिमागलाई आफ्नो पुर्ण हौसला र हिम्मत प्रदान गर्नु भएर यस्लाई सम्पन्न गराइदिन मुख्य भुमिका निर्वाह गर्नु भयो । साथै यस किताबलाई शुरु देखि अन्त्य सम्म अध्ययन गरेर यसमा भएका गल्ती छनोट गरि यस्लाई एउटा सुन्दर रुपमा प्रस्तुत गर्न मुख्य भुमिका राख्नु भएका आदरणीय अहमद रजा, एहसानुल्लाह मियाँ, मुफ्ती नबि बख्श साहब ज्यूँ, दाजु अब्दुल अजिज र अरु दाजुभाइ दिदिबहिनीहरु जस्ले किताबको पुर्ण रुपमा पढेर त्यहाँ बहेका गलती बारे अवगत गराउनु भयो उहाँहरु सामु हार्दिक धन्यवाद व्यक्त गर्दछु जस्को मेहेनत बिना यो कार्य सम्पन्न हुन अत्यन्तै गार्हो हुन्थ्यो ।

निश्चित रुपमा यो किताब तपाईहरु सामु उपस्तिथ हुन विभिन्न इस्लामी व्यक्तित्वहरुको ठूलो सहयोग रह्यो जस्को प्रयास र योगदान बिना म यो कार्य बारे सोच्न पनि सक्षम हुदैन थिए होला । सम्पुर्ण महानुभाव, सहयोगी व्यक्तित्व, मन र मस्तिष्कबाट साथ दिने आदरणीय अग्रजहरुको लागि दुआ गर्दछु कि अल्लाह तआला वहाँहरु को योगदानलाई आफ्नो दरबारमा स्विकार गरून् र अझ दिन र सुन्नीयतको कार्य गर्ने तौफिक प्रदान गरून् । आमिन । साथै वहाँहरु र पृय पाठकहरु संग दुआको लागि अनुरोध पनि गर्दछु ।

नोट : किताब भित्र केही त्रुटि र गलती देख्नु भएमा सवाबको नियतले निम्न somepeople.sk@gmail.com मा जानकारी गराउनु होला ।

**७८६**

**९२**

हाम्रो प्यारो देश नेपाल ज्ञान, बिकास र उपलब्धि जस्ता कुराहरुमा निकै पछि रहेको कुरा सबैलाई थाहा नै छ । खास गरि यहाँ बसोबास गर्ने मुस्लिमहरु जुन इस्लामी शिक्षा र आचरण साथै नबवी अख्लाक व आदाब (अल्लाहको नबिको बानीबेहोरा)बाट निकै टाढा थिए र निश्चित रुपमा यो एउटा ठूलो घाटा थियो । यस्तो अवस्थामा यहाँ यस्ता महान व्यक्तित्वहरुको आगमन भएको थियो, जसको कदमस्पर्सले मात्र नै यहाँको भुमि सदैवको लागि लोकप्रिय र एउटा आस्थाको स्थल बन्न पुग्यो ।

याद राखौ, नेपालमा ९५.५% भन्दा बढी गैर धर्मावलम्बीहरु रहेका छन् । यो हुदाँ हुँदै पनि यो देशको सम्बन्ध मुस्लिमहरु संग धेरै पुरानो रहेको बारे, देशका इतिहासकारहरुबाट थाहा पाउन सक्छौ । ईतिहासकारका अनुसार ५ या ६ इस्लामी शताब्दीबाट नै नेपालमा मुस्लिमहरुको आगमन भएको कुराको प्रमाण अहिले पनि नवलपरासीमा रहेको "मदारिया पहाड" ले दिने गर्दछ। त्यहा हजरत सैयद बदिहुद्दिन कुतुबुल मदार रह्मतुल्लाह अलैहले छैटौं इस्लामी सदिमा उत्तर प्रदेशको बोर्डरको बाटो हुँदै "सात माथा" पहाडको भागमा आउनुभइ चिल्ला (इबादत) गर्नु भएको प्रमाण पाइन्छ । यस्तै गरि काठमाडौं शहरमा आठौ इस्लामी शताब्दिको शुरुवातमा त्यहि बसोबास गर्नु भएर इन्तेकाल हुनु भएका हजरत सैयद मिस्किन शाह कश्मिरी रह्मतुल्लाह अलैह र उहाँकै छेउमा रहेका हजरत सैयद गयासुद्दिन शाह कश्मिरी रह्मतुल्लाह अलैहको मजार पनि यो कुराको ठोस सबुत हो ।

यो बाहेक महोत्तरी जिल्लाका तीन बुजुर्ग हजरत सैयद दाता रहम अलि,

हजरत सैयद गदा अलि शाह, हजरत सैयद दाता बहार अलि शाह रहिमहुमुल्लाह अलैहिम अज्मइनको कबरहरुले पनि यो कुराको गवाही दिने गर्दछ कि मुस्लिमहरुको नेपाल संग एउटा लामो र पुरानो नाता रहेको छ। तर पहिलाका समयमा बाटो नहुनु र कुनै ठाउँ बारे ज्ञान नहुनुले गर्दा इस्लामका मुबल्लिगहरुले धेरै दुःख र पीडा भोग्न परेको थियो तर आज यहाँ जे जति इस्लामको उज्यालो फैलिएको छ यो सबै तिनै बुजुर्गहरुको दुख, पीडाको देन हो। अल्लाह तआलाले सबैलाई कुबुल फर्माउन्।

नेपालमा जहाँ धेरै बुजुर्गहरुको फैजान जारी रहेको छ त्यही हाम्रा धेरै ओलमा ए किरामहरुले पनि यहाँ इस्लामको चिराग जलाउनुमा ठूलो भुमिका खेल्नु भएको छ।

उहाँहरु मध्य एक, तराइ भुभागको एउटा प्रमुख नाम व्यक्तित्वको नाम शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकी बरकाती (रह्मतुल्लाह अलैह) हुन। जस्ले आफ्नो जीवनकाल इस्लाम, अल्लाह र उस्को रसुलको सन्देश को तब्लिग मै व्यतित गर्नु भयो।

**जन्मस्थल**

जनकपुर शहरबाट लगभग ३ किलोमिटर भित्र रहेको एउटा गाउँ जस्को वासीहरु पहिलैबाट शिक्षित, बिकसित र राजनितिक ढंगले अरु गाउँवासी भन्दा उच्च रहेको थाहा पाइन्छ। त्यहाका बासिन्दाहरुले राष्ट्र प्रती प्रेम र आपसी भाइचारा उनिहरुकै पूर्वजहरुबाट विरासतमा पाएका थिए। त्यहि गाउँमा यस समयका यस्ता ठुला विद्वानको जन्म भयो जस्को इस्लाम र सुन्नत माथी अडिगताले आफ्ना त आफ्ना, परायालाई पनि सोच्न बाध्य बनाइदियो। उहाँ कुतुब तर्फ एउटा सम्बन्ध गास्दै अब यस गाउँको नामको साथमा "शरिफ" शब्द पनि जोडेर निकै इज्जत र प्रतिष्ठाको साथ लोहना शरिफ भनिने गरिन्छ शरिफ शब्द जुड्नुका साथै यसको असल र सत्यता हुनुमा गवाही दिदैछ।

*प्यारा नबिका सुन्नत कै, बरकतले साजिद आज पनि*

*फैजाने हजरत बनेको छ, बरकत नगर लोहना शरिफ*

यदि यस गाउँको एउटा सर्भे गर्ने हो भने यहाँ ज्ञान र शिक्षाका यस्ता यस्ता कोहिनुर पाउन सक्छौ जो दिनी ज्ञानका साथ साथै इस्लामी आचरणबाट पनि भरिएका छन् ।

यसै गाउँका वासिन्दाहरु मध्यका एक मौल्वी जासीम सिद्दिकी मर्हुम पनि हुन जस्को राम्रो आचरण, असल बिचारको चर्चा चारै तर्फ फैलिएको छ। वहाँको आँगनमा जति ओटा फुल फुले अर्थात जति पनि उहाँका सन्तान भए सबै ज्ञान र हुनरका बेजोड नमुना साबित भए । कोहि डाक्टर, कोहि इन्जिनियर, कोहि प्रोफेसर त कोहि इस्लामका ज्ञानि ।

उहाँको सन्तानहरु मध्य सबै भन्दा धेरै फजिलत र बुजुर्गि त्यो सन्तानले पायो जो सुर्यको उज्यालो झै आज हरेक शहर र गाउँमा प्रचलित हुदै आफ्नो उज्यालोले सम्पुर्ण अन्धकारलाई समाप्त पार्दै गए। जस्लाई आज देशबिदेशमा शेर ए नेपाल जस्तो गरिमामय उपनामबाट चिनिने गरिन्छ।

## जन्म

हजरत शेर ए नेपालको जन्म बुबा जनाब मुहम्मद जासिम सिद्दिकी र आमा रशिदा खातुनको कोखबाट पहिलो सन्तानको रुपमा २८ सफरुल मुजफ्फर १३६२ हिजरी संवत् र ५ मार्च १९४३ इस्वि संबत र फाल्गुण २२ गते १९९९ वि.सं. लोहना शरिफमा बिहिबार राति भएको थियो ।

## नाम र नसब

जन्मको बेला राखिएको नाम मुहम्मद जैश हो तर मुरशिदे बरहक हुजुर सैयदुल ओलमा अल्हाज सैयद शाह आले मुस्तफा कादरी (रह्मतुल्लाह अलैह) मारेह्रा शरिफले उहाँलाई जैश मुहम्मदको नामबाट याद गर्नु हुन्थ्यो र अहिले

उहाँको यहि नाम चर्चित रहेको छ।

सन् १९९३ मा पहिलो पटक हज र जियारतको लागि मक्का मदिना जानुभएको बेला त्यहाका मुअल्लिमहरुले मुहम्मद जैश मुहम्मद को नामबाट याद गर्नु हुन्थ्यो।

उहाँको बंशावली नसब यसरी रहेको छ : जैश मुहम्मद बिन अल्हाज शैख मुहम्मद जासिम बिन अल्हाज शैख मुहम्मद अस्गर अलि बिन शैख मुहम्मद अक्बर अलि बिन शैख मुहम्मद दिलावर हुसैन सिद्दिकी।

साथै उहाँको नसब मुअमीनहरुका अमिर, सम्पुर्ण मुस्लिमहरुका लागि बनेका खलिफा हजरत सैयदना अबुबकर सिद्दिक रदि अल्लाहु अन्हु संग मिलेको प्रख्यात छ।

## शेर ए नेपालको दाजु भाइ र दिदि बहिनी

उहाँको छः (६) भाइ र एक (१) बहिनी हुनुहुन्छ :

१) उहाँ आफै नेपालका मुफ्ती ए आजम, जो ज्ञान र तक्वामा कामिल हुनुका साथै धेरै खुबीहरुका मालिक थिए।

२) जनाब मुहम्मद शोएब, साबिक राष्ट्रिय हज कमिटीका अध्यक्ष

३) जनाब उबैद जो बनावट (काश्तकारी) का कार्यमा अलग एउटा नमुना राख्छन्

४) प्रोफेसर जनाब मुहम्मद हमिदुर रह्मान

५) डाक्टर मुहम्मद उजैर साहब

६) हाफिज व इमाम जनाब मुहम्मद हुसैन हाल बेङ्लोर

## प्रारम्भिक शिक्षा र हिफ्जे कुरआन

समयको घडी चल्ने क्रममा त्यो स्थानमा पुग्यो जुन कुनै पनि परिवारको लागि एउटा गरिमामय समय भनेर बुझिन्छ अर्थात बालकको शिक्षा प्राप्तीको समय।

उहाँको उमेर  लगभग ३.५२४ बर्ष हुदा बुवा र काकाले बिस्मिल्लाह खानी गराएर उहाँको शिक्षाको प्रारम्भ गर्नु भएको थियो । पछि दैनिक रुपमा घर नजिकैको मक्तबमा आफ्नो काका मौलाना जम्शेद अलि सिद्दिकी (अल्लाह वहाँलाई जन्नतुल फिर्दोसमा ठुलो स्थान प्रदान गरून्)बाट कुरआन करिमलाई हेरेर पढ्न सिक्नुभयो, साथै केही उर्दु र केही हिन्दी पनि सिक्नुभयो । आफ्नो काकाको प्रिय गुरु मौलाना अब्दुल हफिज बासुपट्टीको सल्लाह अनुसार कुरआन हिफ्ज गर्ने इच्छा अनुरुप १० पारा सम्म घरकै मक्तबमा कन्ठस्थ गर्नुभयो र फेरि बासुपट्टि अनि भारतको कन्ह्वा मा रहेको अश्रफुल उलुम मदर्सामा  कुरआनको हिफ्ज पूरा गरि शाबानमा घर फर्किनु भयो ।

नोट : यहाँ हजरतको बिबेकबल र हिम्मत बारे एउटा घटना पनि लेख्दैछुः कुनै पनि व्यक्तिलाई कुरआन हिफ्ज गरि सकेपछि एकपटक पूरा दौर गरेर सुनाउन अत्यन्तै आवस्यक हुन्छ जुन बिना धेरै गल्ती हुने गर्दछ । तर सलाम छ मेरो पिरको हिम्मत र बिबेकबल माथी, शाबानमा बिदा भएकाले कुरआन हिफ्ज मुकम्मल गरेर घर फर्कनु भयो । अहिले सम्म कसैलाइ दौर सुनाउनु भएको थिएन तर हिम्मत गरेर दिनमा केही भाग रिभाईज गरेर आफ्नै घर छेउको मस्जिदमा रमजानको तराविहमा पहिलो पल्ट पूरा कुरआन करिम सुनाउनु भयो । सुब्हानल्लाह ! निशन्देह यो अल्लाहको तौफिकबाट नै सम्भव भयो ।

## अरबी, फार्सीको शिक्षा

ज्ञान प्राप्तीको लागि आफ्नो घर छोडेर गरिएको यो सोही (कन्ह्वा) मदर्सा तर्फ दोश्रो सफर थियो । शुरुवातको फार्सी जस्तै फार्सीको पहिलो, दोश्रो किताब, हिकायत र लतायफको किताब, गुल्सिता, बुसेता, मिफ्ताहुल कवाएद र मिजानुस सर्फ त्यही पूरा पढ्नुभयो । केही समय पछि मौलाना मुहम्मद दाउद बाडावी लोह्ना शरिफ आउनु भयो र वहाँले (हजरत शेर ए नेपाल र वहाँको काकाको छोरा मौलाना मुहम्मद जुबैर अहमद साहब)लाई मदर्सा ए अह्ले सुन्नत दारुल उलुम अलिमिया दामोदरपुर जिल्ला मुजफ्फपुर तर्फ जाने सुझाव

दिनुभयो। त्यसपछि उहाँहरु दुवै जना त्यहा गएर दर्ज ए खामिसा सम्म दिनको ज्ञान प्राप्त गर्नु भयो।

त्यसपछि इल्म प्राप्तीको निम्ति ज्ञान र शिक्षाको केन्द्र बरेली शरिफ तर्फ प्रस्थान गर्नुभयो। त्यहा आला हजरत इमाम अहमद रजा खाँ द्वारा संचालित मदरसा मन्जरे इस्लाममा भर्ना हुनुभयो। त्यो समयमा त्यहा निकै तह्किकका साथ पढाइ हुने गर्दथियो। सबकको बिचमा बातिल अकिदा वाला खास गरि दियाबनहको रद्द हुने गर्दथियो। त्यो समयमा आला हजरतका नाति मुफस्सिरे आजमे हिन्द मौलाना इब्राहिम रजा रह्मतुल्लाह अलैह को निगरानीमा मदर्सामा पढाइ हुने गर्दथ्यो। त्यही हजरत शेर ए नेपालले मिश्कात शरिफ, तफ्सिरे जलालैन शरिफ, हिदाया औवलिन, मिर्कातुल फरायज आदि जस्ता ठुला ठुला किताबको अध्यन गर्नुभयो। पछि अश्रफिया मुबारकपुरका फारिगिन गुरुहरुको सल्लाह अनुशार बरेली शरिफबाट भारतको सबैभन्दा ठूलो इस्लामी विश्वबिद्यालयमा भर्ना लिनु भयो र त्यही आफ्नो पढाइ पूरा गर्नुभयो।

मन्जरे इस्लाममा उहाँले निकै मेहनतका साथ पढ्नु भयो। साथ साथै फुर्सतको समयमा आला हजरतका कान्छा छोरा, मुफ्ती ए आजमे आलमे इस्लाम, पन्द्रह्वी सदिका मुजद्दिद हजरत अल्लामा शाह मुस्तफा रजा खाँ रह्मतुल्लाह अलैह सामु उपस्तिथ भएर फैज हासिल गर्नुहुन्थ्यो। पढाइ कै दिनहरुमा नह्वका इमाम हजरत अल्लामा सैयद गुलाम जिलामी मिरठि, मुजाहिदे मिल्लत मौलाना हबिबुर रह्मान उडिसा, हजरत मौलाना रिफाकत हुसैन साहब अश्रफी, हजरत अल्लामा काजी शम्सुद्दिन जोन्पुरी, हजरत अल्लामा सुलैमान साहब रहिमहुमुल्लाहु अज्मइन जस्ता समयका दिग्गज ओलमाको जियारत गर्नु भयो र उहाँहरुको नसिहत सुन्ने तौफिक पनि प्राप्त गर्नुभयो।

## फरागतको ताज

१० शाबानको दिन १३८६ हिजरी र २४ नोवेम्बर सन् १९६६ र वि.सं २०२३

मङ्सिर ९ गतेको दिनमा दस्तारे फजिलतको एउटा विशाल जल्सा मुबारकपुर शहरको बिच आबादी गल्ला मन्डीमा भएको थियो । त्यो बर्ष फारिग हुने आलिम र हाफिज को शंख्या ४० थियो तर जब उनिहरुलाई दस्तार बाध्ने समय भयो तब जलालतुल इल्म हुजुर हाफिजे मिल्लतले हाम्रा शेर ए नेपाल तर्फ इशारा गर्दै बोलाए "तपाईं मुकद्दमतुल जैश (सम्पुर्ण सिपाहिका अगुवा) हुनुहुन्छ। तपाईं सुरुमा आउनु होस्" । यसरी सर्वप्रथम हजरत शेर ए नेपालको सिरमा फजिलतको ताज सजाइयो । सोचाइको संसारमा ढुबेर हेर्ने हो भने यस्तो लाग्दथियो कि स्टेजमा बसि रहनु भएका सैयदुस सादात सैयद मुजफ्फर हुसैन अश्रफी र हुजुर हाफिजे मिल्लत दुवै मिलेर नेपाल बाशीहरुको लागि एउटा नयाँ ताराको आगमनको सन्देश दिदै थिए जुन् ताराले नेपालमा उठेका र उठ्ने हजारौ फित्ना को यसरी गला घोट्ने छ जसरी लाहौल पढ्दा शैतानको घोटिन्छ। निःशन्देह ! अल्लाहको वलिको नजर भबिष्यमा रहेको हुन्छ। त्यस पछि उहाँ जल्सा भएको ठाउबाट ओर्लिएर मस्जिदमा जानुभयो र त्यहा दुई रकात शुक्रको नमाज अदा गर्नुभयो ।

घर फर्कने क्रममा हुजुर हाफिजे मिल्लत रह्मतुल्लाह अलैहले हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई भन्नु भएको थियो कि "म तिमीलाई एक्लै इस्लामको फौज बनाएर पठाउदै छु" ।

## शैक्षिक जीवनको पुण भ्रमण

कुरआन नाजरा पढ्नु देखि लिएर हिफ्ज हुँदै सिरमा फजिलतको ताज लगाउने बेला सम्मको समय २३ बर्ष ७ महिना ७ दिनको थियो । शैक्षिक समय देखि नै उहाँ नमाज र रोजाको एकदमै पालना गर्नु हुन्थ्यो । नमाजको पाबन्दी, जमाअतका साथ नमाज पढ्नु, फजर पछि कुरआनको तिलावत गर्नु, समयमा नै आफ्नो कक्षामा उपस्थित हुनु, शिक्षकको कुरालाई ध्यान दिएर सुन्नु, मसअला या कुनै कुरामा उल्झन् महसुस भए उनिहरु संग सोध्न लाज मह्सुस नगर्नु, पढेको सबकलाई पुनः पढ्नु र साथीहरु संग बसेर छलफल गर्नु । सम्पुर्ण

शिक्षकहरु र साथीहरुले उहाँलाई निकै माया र प्रेम गर्ने गर्थे। उहाँ साथि र अरु व्यक्तिहरु संग नरम भावना राख्नु हुन्थ्यो। उहाँ संगै पढ्ने एउटा साथीको बयान हो कि उहाँ पढ्ने समयबाट नै निकै मायालु स्वभावका थिए।

फरागत पछि नै उहाँ दिन, सुन्नीयत र मस्लके आला हजरतलाई फैलाउन सधै लागि पर्नुभयो र आफ्नो स्वास्थ्य र आरामलाई पनि मध्यनजर नगरी सम्पुर्ण तुफान संग लड्दै अगाडि बढ्दै गए। मस्लके आला हजरतको बारेमा समाजमा जे जस्ता गलत हल्लाहरु थिए सबैलाई मेटाउदै यसरी अघि बढे कि हरेक व्यक्ति मस्लके आला हजरतको पक्का दिवाना र उहाँको ज्ञान र प्रतिष्ठा बारे अवगत हुन थाले र जीवनको अन्तिम पल सम्म उहाँको मुखमा यहि बोली थियो कि :

मस्लके आलाहजरत माथी कायम रह

जीवन पायौ हामिले यसैको लागि ॥

## शेर ए नेपालका शिक्षकहरु

१) अल जामीअतुल अश्रफियाका निर्माणकर्ता हुजुर हाफिजे मिल्लत अश्शाह अब्दुल अजिज मुबारकपुरी।

२) हजरत अल्लामा अब्दुल रउफ बल्यावी अलैहिर रह्मा नायब शैखुल हदिष (मुबारकपुर)।

३) हजरत बेह्रुल उलुम मुफ्ती अफ्जल हुसैन मुङ्गिरी (बरेली शरिफ)

४) हजरत मुफ्ती अब्दुल मन्नान आजमी (मुबारकपुर)

५) मुफ्ती सैयद आरिफ हुसैन रज्वी (नान्पारा)

६) हजरत अल्लामा मुफ्ती जहिरुद्दिन रज्वी (बरेली शरिफ)

७) मुफ्ती जहाङ्गिर खाँ (बरेली शरिफ)

८) मुफ्ती अब्दुल कलिल अश्रफि (बिहार)

९) हजरत अल्लामा सैयद हामिद अश्रफ किछौछ्वी (मुबारकपुर)

१०) काका हजरत मौलाना मुहम्मद जम्शेद सिद्दिकी (लोह्ना शरिफ)

*रहिमहुमुल्लाहु अलैहीम अज्मइन ।*

## शिक्षाबाट फरागत पछि

मदर्साबाट फारिग भए पछि आफ्ना पुराना शिक्षक हजरत अल्लामा मुफ्ती मुहम्मद काजिम अलि मर्हुमको आज्ञाको पालना गर्दै सन् १३८६ हिजरीमा आफू पढेकै मदर्सा अर्थात दारुल उलुम अलिमिया दामोदरपुर जिल्ला मुजफ्फरपुर मा शिक्षकको हैसियतले पढाउन थाल्नु भयो । त्यहि समयमा नै उहाँको कक्षामा बुखारी शरिफ, मुस्लिम शरिफ, बैजावी शरिफ जस्ता उच्च किताबहरु राखिएको थियो । यसै क्रममा शाबानमा मदरसामा बार्षिक बिदा भयो र घर फर्कदा जनकपुर बासीहरुले त्यहीको मकतब मा दिनी तालिम दिने बारे एउटा प्रस्ताव उल्लेख गरिएको पत्र प्राप्त गर्नु भयो । हुन त सानै देखि उहाँ रह्मतुल्लाह अलैह को जनकपुर मै एउटा केन्द्रिय मदरसा बनाउने र सबैलाई दिने इस्लाम बारे अवगत गराउने इच्छा र उदेश्य थियो तसर्थ खुशीका साथ उहाँले त्यो प्रस्ताबलाई स्विकार्दै त्यस्को पछाडि स्विकार नामा लेख्नुभयो ।

लिखित वचन अनुसार नै २३ शाबानुल मुअज्जम १३८७ हिजरी मा जनकपुर आउनु भयो । सुब्हानल्लाह ! उहाँको आगमन मात्र के भएको थियो पूरा जनकपुर वासीहरु खुशिभाव मा लिप्त भएर चारै तर्फ खुशियाली बाट्दै हिडेका थिए । त्यो भुभाग जहाँ इस्लामको उज्यालो निभ्न थालेको थियो त्यो ठाउँमा उहाँको आगमनले उज्यालो को दिप जग्मगायो । जनकपुर शहर मै रहेको मक्तब बिस्तारै मदर्सा बन्यो र मदर्सा बिस्तारै दारुल उलुम बन्न पुग्यो । दारुल उलुमको पुरानो नाम इस्लाहुल मुस्लिमिन थियो । यो यस्तो नाम थियो जसबाट मज्हब र मस्लक बारे थाहा हुन्थेन साथै त्यो बेलामा सलफी

वहाबीको कालो बादल छाएको थियो । तसर्थ उहाँ रह्मतुल्लाह अलैह ले दारुल उलुमको अगाडि "हनफिया" जोड्नु भयो जस्को नामबाट मजहब बारे थाहा भयो र अल्लाह को हजारौ शुक्र कि त्यस्तै भयो ।

मुस्लिमहरुको इस्लाहको नाममा जब सल्फी वहाबी नज्दीले मुस्लिमहरुलाई कुफ्रमा जलाइ रहेको थियो तब मज्हबे हनफिया र मस्लके आला हजरत को समर्थन् मा तपाईं रह्मतुल्लाह अलैहको नारा चल्ना साथौ बद् अकिदाहरुको मुटु हल्लिन थाल्यो । अब मस्लके आलाहजरतको नारा लगाइन थालियो, हनफिहरुको बोल बाला हुन थाल्यो र बड्दै गयो । त्यसैले हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले मदर्साको नाम दारुल उलुम हनफिया राख्नु भएको थियो र रमजानको प्यारो महिनामा छापिने पोस्टरमा अल्लामा जामी रह्मतुल्लाह अलैहको यो लेख लेख्नु भयो )

मज्हबे हनफिया दारम मिल्लते हजरत खलिल

खाके पाए गौषे आजम जेरे साया हर वलि ।

फेरि १४०८ हिजरीमा फतवा बरकात जिल्द ०१ को तकरिजमा हुजुर अह्सनुल ओलमा रह्मतुल्लाह अलैहले दारुल उलुमको साटो जामिआ र हनफिया पछि गौषिया बढाइदिनु भयो जस्बाट  मजहबको साथ साथै मशरब अर्थात सिल्सिला बारे नि एलान हुँदै गरोस् । त्यही बर्ष १४०८ हिजरी को विशाल दुई दिने जल्सामा यहि जामिआ हनफिया गौषिया को नामबाट एलान गरियो ।

## विद्यार्थीहरु प्रती माया

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह शिक्षाको साथ साथै तरबियत माथि पनि धेरै जोर दिने गर्नु हुन्थ्यो । अकाइदको सहि इस्लाह, गलत अकिदाको परिचय र उनिहरुको रद गर्ने उपायहरु, बदमज्हब बारे ज्ञान दिन आफ्ना काबिल विद्यार्थीहरुलाई भाग भागमा पठाउनु, अजान र नमाज बारे समय समयमा सख्ती गरि राख्नु , यस्ता कुराहरु प्रति उहाँ खास गरि मेहनत गर्नुहुन्थ्यो । कहिले

काहीँ जब मस्जिदमा बस्दा जमाअतको लागि समय हुन्थ्यो तब विद्यार्थीहरु संग नमाज को तरिका, रुकुअ, सुजुद गर्ने बारे बिस्तृत रुपमा सुन्नु हुन्थ्यो । जुन विद्यार्थीले सहि तरिकाले बताउथ्यो उस्लाई निकै स्याबासी दिनुहुन्थ्यो ।

## बासुपट्टिको मुनाजरा र शेर ए नेपालको उपनाम

भारतको एउटा जिल्ला मधुबनीमा एउटा प्रख्यात रुपमा रहेको बजार छ जस्को नाम बासुपट्टि हो । त्यहा सन् १९८३ साल अर्थात १३९२ हिजरीमा एउटा व्यक्तिको घरमा मिलाद शरिफको महिफल थियो, त्यसैमा हजरतलाई पनि दावत दिइएको थियो । त्यति बेला मिलाद र उठेर सलाम पढ्नको विरुद्धमा एउटा मौल्वी अहमदिया सल्फियाले किताब लेखेको रहेछ । त्यही समय हजरतले त्यो किताबको बिरोधमा अर्थात कुरआन र हदिषबाट मिलाद र उठेर सलाम पढ्नु बारेमा निकै उत्कृष्ट बयान गर्दैथिए । त्यत्तिकै मा छेउमा लुकेर बसेको एउटा वहाबी मौल्वी को पेट पोलेर त्यहाबाट अनाप सनाप बोल्दै हजरतलाइ मुनाजराको च्यालेन्ज दियो, जस्लाइ हजरतले त्यही समय स्विकार्नु भयो र हजरतले भन्द्रभयो "अहिल्यै मुनाजरा गरौ, नभाग" । तर त्यो वहाबी मौल्वीले एक हप्ता पछिको समय तोकेर त्यहाबाट फरार भयो । यो खबर पूरा बजार मात्र नभइ वरिपरिका सबै ठाउँमा हावा जस्तै तेज गतिले फैलियो । एक हप्ता पछि सो समयमा मुनाजरा हेर्न नजिक तथा टाढाबाट आएका ब्यक्तिहरु को भिडले त्यो पूरा बजार नै घेरियो । बोलाइएका र नबोलाइएका ओलमाका एउटा लामो काफिला हजरत शेर ए नेपालको एक बोली मै धमाधम आइपुगे । जसरी समय बित्दै गयो तब तब मनिसहरुमा बेताबि बढ्दै गइरहेको थियो तर पूरा दिन बित्दा गैरमुकल्लिद अह्ले हदिषको तर्फबाट कुनै पनि मौल्वी आएनन् ।

## मुनाजरामा आएका ओलमा ए किराम

हुन त त्यो मुनाजरामा सय भन्दा बढी ओलमा ए किराम र मशाइखे किरामको

एउटा नुरानी काफिला शामिल थियो तर तिनिहरु मध्ये केहीको नाम तल लेखिएको छ :

- मुनाजिरहरुका सुल्तान हजरत मुफ्ती रिफाकत हुसैन मुफ्ती ए आजमे कान्पुर रह्मतुल्लाह अलैह ।
- बुखारी शरिफको शरह लेख्ने मुफ्ती शरिफुलहक अम्जदी रह्मतुल्लाह अलैह ।
- हजरत अल्लामा अब्दुल मन्नान साहब शैखुल हदिष शम्शुल उलुम गोशी ।
- शेर ए बिहार मुफ्ती असलम साहब मोह्तमिम जामीआ कादरिया मक्सुदपुर ।
- मुफ्ती मह्बुब रजा रोशनुल कादिरी प्रन्सिपल जामीआ हमिदिया ।
- मौलाना जुबैर अहमद साहब शिक्षक मदर्सा तन्जिमुल मुस्लिमिन ।
- फातहे नेपाल गंज मौलाना अब्दुल जब्बार मंजरी ।
- हजरत मौलाना मुहम्मद अय्यूब साहब बाडावी अलैहिर रह्मा ।

यो मुनाजरामा मुनाजिरको ठूलो पोस्टमा प्यारा गुरु, नेपालका सबै भन्दा ठुला मुफ्ती, हजरत अल्लामा मुफ्ती जैश मुहम्मद सिद्दिकी रह्मतुल्लाह अलैह हुनुहुन्थ्यो । हक र बातिलको ठूलो युद्धमा उहाँलाई अल्लाह सुब्हान व तआलाले ठुलो जित प्रदान गर्नु भयो जस्मा मस्लके आला हजरत को सच्चाइ आकाशमा चम्किने सुर्य भन्दा पनि खुलेर देखिन थाल्यो र सबै ठुला साना व्यक्तिलाई देओबन्दीको धोकादडि को बारेमा खुलस्त रुपमा थाहा भयो । त्यो मुनाजरा पछि जुन व्यक्ति वहाबीको फरेबमा आएर असल मज्हबलाई छोडेर गलत मज्हबको सिकार हुन पुगेका थिए उनिहरुले एउटा ठूलो शंख्यामा तौबा गरेर मस्लके अह्ले हक, मस्लके अह्ले सुन्नतलाई साचो मनले स्वीकार गरे ।

## शेर ए नेपालको उपनाम

त्यसै मुनाजरा जस्मा समयका ठुला ठुला आलिमहरु उपस्तिथ थिए र अल्लाह

पाकले मुफ्ती जैश मुहम्मद रह्मतुल्लाहको हाथमा बिजयको झन्डा दिनु भएको थियो। पूरा रात उहाँ रह्मतुल्लाह अलैह देओबन्दका मौल्वीहरुलाई लल्कार्दै, उनीहरुलाई बोलाउदै पूरा रात मिलाद र उठेर सलाम पढ्नु बारे कुरआन र हदिषबाट साबित गर्नु हुदा पनि कुनै देओबन्दीले हजरत रह्मतुल्लाह अलैह सामु बोल्ने हिम्मत गरेन। त्यसै समयमा हुजुर शारेह बुखारी, हुजुर बेह्रुल उलुम, अमिने शरीअत, शेर ए बिहार रहिमहुमुल्लाह जस्ता ठुला ठुला आलिमहरुले उहाँलाई "**शेर ए नेपाल**" को उपनामबाट सम्बोधित गर्नु भयो । त्यो समय पछि यो नाम यति प्रचलित भयो कि हरेक साना ठुलाले उहाँ रह्मतुल्लाह अलैहलाई उहाँ को नाम भन्दा यो लकबबाट बढी चिन्ने गर्दछन्।

## जनकपुरमा ऐतिहासिक पहिलो जल्सा

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले जनकपुर शहरमा एउटा ऐतिहासिक जल्सा १३९४ हिजरी रबिउल अव्वल शरिफको २०,२१,२२ मा जामिआ हनफिया गौषिया को तर्फबाट गराउनु भयो जस्को नाम जल्सए सरकारे मदिना सल्लल्लाहु अलैही वसल्लम राखिएको थियो । जस्को सरपरस्ती सैयदुस सादात, हुजुर सैयदुल ओलमा सनदुल हुकमा सैयद आले मुस्तफा कादरी बरकाती सज्जादा नशिन खानकाहे बरकात मारहरा शरिफ अलैहिर रहमाले गरेका थिए । त्यसै जल्साको सदारत उस्ताजुल ओलमा, जलालतुल इल्म हुजुर हाफिजे मिल्लत अलैहिर रह्मा बानी जामीआ अशरफिया मुबारकपुरले गरेका थिए। सोही प्रोग्रामको सम्पुर्ण इन्तेजाम काजि ए नेपाल शेर ए नेपाल मुफ्ती ए आजमे नेपाल अलैहिर रह्मा र फातहे नेपालगंज मौलाना अब्दुल जब्बार मंजरी साहब ले गर्नु भएको थियो। यो प्रोग्राममा भारत र नेपालबाट धेरै ओलमा को उपस्थिती रहेको थियो तर उनिहरु मध्ये केहीको मात्र नाम यहाँ उल्लेख गरिएको छ :

- सैयदुल ओलमा हजरत सैयद आले मुस्तफा कादरी बरकाती रह्मतुल्लाह अलैह मारेहरा शरिफ।

- जामीआ अशरफियाका निर्माणकर्ता हुजुर हाफिजे मिल्लत अलैहिर रह्मा ।
- हजरत अल्लामा मौलाना सैयूयद मुजफ्फर हुसैन साहब अलैहिर रह्मा ।
- मुफ्ती ए आजमे हालेन्ड मुफ्ती अब्दुल वाजिद साहब अलैहिर रह्मा ।
- शेर ए बिहार मुफ्ती अस्लम साहब अलैहिर रह्मा बिहार ।
- मह्बुबुल ओलमा मुफ्ती शम्शुल हक अलैहिर रह्मा बाडावी ।
- हजरत मौलाना मुहम्मद जुबैर अह्मद साहब ।

यस बाहेक प्रोग्राममा धेरै ओलमा, मशाएख, खतिब, शाएरको उपस्तिथि रहेको थियो ।

## नेपालको राजधानीमा शेर ए नेपाल

नेपालको राजधानी काठमाडौंको सुन्नी कश्मिरी मस्जिदमा एउटा बहस शुरु भयो, यो बहस अरु कार्यका साथै इमामतको कार्यमा समेत मिसिन गयो । इमाम कस्लाइ बनाउने? यस्लाई बनाउने कि उस्लाई बनाउने बारेमा निकै चर्का चर्की हुन थाल्यो । त्यहाका अरकानहरुलाई एउटा आलिम जस्ले अमल पनि गरोस्, एउटा शरीअत माथि चल्ने जस्को आचरण एक्दमै राम्रो होस्, यस्तै गुणहरु भएका व्यक्तिको खोज थियो जस्को लागि उनिहरु ले चारै तर्फ आफ्नो आँखा दौडाए तर यस्ता गुण भएका कोइ पाएनन् । यदि त्यो समयमा सबै भन्दा धेरै शरिअतमा अडिग, खुबी र कमाल, इज्जत र प्रतिष्ठा, हिम्मत र निडर्ता कुनै व्यक्तिमा थियो भने त्यो मुफ्ती ए आजमे नेपालको व्यक्तित्वमा थियो । तर त्यति बेला उहाँ एउटा मकतबको शिक्षक थिए, जस्को सम्पुर्ण बाग्डोर उनैको हाथमा थियो । आफ्नो पढाइको समयमा अह्ले सुन्नत वल जमाअतलाई फैलाउन आफ्नो आँखामा उत्पन्न गरेको सपनालाई पूरा गर्न उहाँ को जनकपुरमा रहनु कति जरुरी थियो भन्ने कुरा उहाँ रह्नतुल्लाह अलैहलाई पनि थाहा थियो र ति व्यक्तिहरु जस्ले निकै उम्मिदका साथ उहाँलाई बोलाएका

थिए उनिहरुलाई पनि थाहा थियो ।

तर जब कुरा दिन र सुन्नीयतलाई बचाउने बारेमा र इमामतको बाग्डोर सम्हालेर निक्लेको बहसको आगोलाई बुझाउने बारेमा थियो तब काठमाडौका केही मानिने व्यक्तित्व जस्तै डाक्टर मुह्सिन, अल्हाज सैयद मोइन शाह, अल्हाज सैयद मोह्सिन शाह, अलहाज सैयद मख्दुम शाह, अल्हाज सैयद फिरोज शाह आदि व्यक्तिहरुले सल्लाह दिए कि शाही जामा मस्जिद कश्मिरिमा खोजिरहेका व्यक्तिको गुण मुफ्ती ए आजम ए नेपालको व्यक्तित्वमा पाइन्छ र उहाँलाई नै यहाँ ल्याउदा उचित हुनेछ। सम्पुर्ण व्यक्तिहरुले यो कुरा माथि सहमति जनाउदै १० व्यक्तिहरुको एउटा समुह बनाएर हजरत शेर ए नेपाल अलैहिर रह्मालाई लिन जनकपुर आएर भने कि “हजरत ! अब तपाई काठमाडौ कश्मिरी जामे मस्जिदमा आएर इमामत सम्हाल्नुस र त्यहा उठेको बहसको बिषयलाई हल गर्नुस, हामी सबै जना यसैमा सहमत छौ”

हजरत शेर ए नेपालको उद्देश्य एउटा केन्द्रिय इदारा कायम गर्नु थियो जहाँबाट मुस्लिमहरुले समस्याको हल र इल्मका खोजकर्ता (तालिबे इलम)हरुले ज्ञान सजिलै संग पाउन सकुन त्यसैले हजरतले आफ्नो सहुलियत र नजरानाको साटोमा एउटा शर्त राखे कि तपाईहरु ले त्यहा एउटा मदरसा पनि चलाउनु हुनेछ भने म जानेछु। सबैले हजरतको यस् शर्तलाई मानेर परेको समयमा भरपुर साथ दिने वाचा सहित दस विद्यार्थीलाई लिएर जाने प्रस्ताव गर्दा हजरतले ५लाई मात्र जनकपुरबाट काठमाडौ लिएर पुगे। अल्हम्दोलिल्लाह ! वाचा गरेका अनुशार वहाँहरु ले बस्ने खाने सम्पुर्ण इन्तेजाम गरे ता पनि एक बर्षको लामो समय कट्दा हजरतको कोसिस माथी कोसिस हुदा पनि इदारा को निरन्तरता हुन सकेन। यसै बिच रमजानको प्यारो महिनाको आगमन भयो, हजरत रह्मतुल्लाह अलैहले नै त्यहाँ खतम कुरआनका साथ पुरा तराविहको नमाज पढाए। १३९५ हिजरीमा राजा बिरेन्द्रको ताज पोशीको समयमा केही व्यक्तिहरुको जनकपुर फिर्ता आउने आग्रहमा स्विकार्दै हजरत रह्मतुल्लाह

अलैह जनकपुर पुग्नु भयो किनकि जुन सुन्नीयतको कार्य जनकपुरबाट हुन सक्द थियो त्यो काठमाडौबाट हुन सक्ने संभावना उहाँले देख्नु भएन।

## शेर ए नेपालका कारनामा र योगदान

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले हरेक ठाउँमा इस्लामलाई फैलाउने र उम्मतलाई एक प्लाट्फर्ममा ल्याउनका लागि र एउटा लिडर र सिपाही बन्ने कर्तव्यको पालना गरिराखे। यस्तो हिम्मत र होसला, कमाल र खुबिलाई देखाउनु भयो कि कडा बिरोधको समयमा पनि बिरोधी र शत्रुको कचाकच भिडको बिचमा रहेर त्यस्ता कार्य गर्नु भयो जस्ले गर्दा नेपालका मुस्लिमहरुको निधार गर्वले उठ्न थाल्यो। अडिगता र सच्चाइको एउटा यस्तो ईतिहास लेख्नु भयो जस्को टाढा टाढा सम्म नमुना पाउन सक्दैनौ। हजरत ताजुश्शरिअह रह्मतुल्लाह अलैहले भन्नुभएको थियो "नेपालमा जे जति मस्लके आलाहजरतको कार्य देखिन्छ त्यो सबै शेर ए नेपालको मेहनत ले गर्दा भएको हो"।

नेपालमा भएको मस्लके आला हजरतको कार्य वहाँ कै तब्लिग र मेहनतको एउटा फल हो। मदरसा बनाउनु, मस्जिदहरुको निर्माण गर्नु, संस्था बनाउनु, ओलमाको एउटा बिशाल समूह नेपाल र नेपालीहरुलाई दिनु, मुनाजरा गर्नु, ठूलो शानका साथ जल्सा र कान्फ्रेन्स गराउनु, बदअकिदाहरु को बिरोध गरेर अह्ले इस्लामलाई सहि मार्ग देखाउन किताबहरु लेख्नु, मुस्लिमहरुको मसअला हल गर्ने शरइ दारुल इफ्ताको निर्माण गर्नु यो सबै त्यस्ता कार्य हुन् जस्ले गर्दा पुरा नेपाल र नेपाली मुस्लिमहरुको बिच हजरत शेर ए नेपालले प्रतिष्ठा र पहिचान पाउनु भयो।

हेर कस्तो फैज रहिछ प्यारो नबिको उनी माथी

सुन्नीहरुको पहिचान बने हजरते शेर ए नेपाल

हजरत शेर ए नेपाल अलैहिर रह्माले १३९० हिजरीमा मुस्लिमहरुको आस्था

माथि भएको हमलाबाट उनिहरुलाई सुरक्षित राख्न र इस्लामी फौजका सिपाही (तालिबे इल्म)हरुलाई शिक्षा प्रदान गर्ने जनकपुर शहरमा एउटा केन्द्रिय सुन्नी मदर्साको निर्माण गरे जस्को नाम जामीआ हनफिया गौषिया राखियो जस्बाट पढेका ओलमा आज पनि देश बिदेशमा फैलिएर अह्ले सुन्नतको कार्य गरि रहेका छन् । आफ्नो गाउँ लोहना शरिफमा मुस्लिम बालिकाहरुलाई शिक्षा र ज्ञानबाट भरिपूर्ण बनाउन र खातुने जन्नत सैयदा फातिमा रदि अल्लाहु अन्हाको आचरण सिखाउन "जामीआ बरकातुज जह्रा" को निर्माण गर्नुभयो। मुस्लिमहरुलाई दिनको बुजुर्गहरुको बाटोमा हिडाउनका लागि, नबवी आचरणको सहि परिभाषा गराउन, औलिया ए किराम र सुफिया ए किरामको ज्ञानको सहि परिचय गराउन बिशाल "खानकाहे बरकात" को निर्माण पनि गर्नु भयो । साथै बार्षिक रुपमा "जल्स ए बर्कातुन नबि" को विशाल प्रोग्राम हरेक बर्ष पनि गराउदै आउनु भयो ।

निःशन्देह उहाँको कार्यबाट अह्ले सुन्नतले निकै फाइदा पाएका छन र आउने धेरै समय सम्म पाई राख्ने छन् ।

## बैअत

जाहिरी ज्ञानको प्राप्तिका साथ साथै बातिनी ज्ञानको प्राप्ति पनि आवश्यक रहेको हुन्छ। कुनै पिर ए कामिल को हाथमा बैअत गरेर रुहानी भित्री र बाहिरी जाम नोश गर्नको लागि बैअतको आवश्यकता रहेको कुरा कसैले पनि इन्कार गर्न सक्दैनन् । हाम्रो बुजुर्गहरुले आफ्नो नफ्सको सुधार र परिवर्तनको लागि यो तरिका अप्नाएका थिए। बैअत र इर्शादबाट दिनका कति कार्यहरु भएका छन् त्यो कुरा कसैबाट पनि लुकेको छैन । त्यसरी नै हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाइ पनि कुनै राम्रो र कामिल पिरबाट मुरिद हुने इच्छा रह्यो । साथै वहाँलाई त्यही मुरिद हुनु थियो जहाँ समयका मुहक्किक इमाम अहमद रजा खाँ आला हजरत रदि अल्लाहु अन्हु मुरिद भएका थिए । त्यसै क्रममा भारतको मारेहरा शरिफ उत्तर प्रदेशमा १३९० हिजरी अर्थात सन् १९७०

र २०२६ वि.सं: मा हुजुर सैयदुल ओलमा सैयद आले मुस्तफा रह्मतुल्लाह अलैह सामु उपस्तिथ भएर मुरिद बन्नु भयो। सिल्सिलए आलिया कादरिया बरकातियामा मुरिद हुनु भएका ले वहाँ ले आफ्नो नाम पछाडी बरकाती लेख्नु हुन्थ्यो र साथै वहाँबाट मुरिद भएका हजारौ व्यक्तिहरु ले पनि आफ्नो नाम पछाडी बरकाती लेख्ने गर्दछन्।

## इजाजत र खिलाफत

उहाँ रह्मतुल्लाह अलैह हुजुर सैयदुल ओलमा सैयद आले मुस्तफा अलैहिर रह्मा संग मुरिद हुनु भयो र वहाँबाट नै तपाईले इजाजत र खिलाफत पनि प्राप्त गर्नु भयो। तपाईंले सिल्सिला ए कादरिया, चिश्तिया, नक्शबन्दीया, सोहर्वर्दिया चारै सिल्सिलामा खिलाफत पाउनु भएको छ।

तपाईले समयका ठुला ठुला बिद्वानबाट खिलाफत र इजाजत प्राप्त गर्नु भएको छ जस्को नाम हामी तल उल्लेख गर्दछौ :

१) पिर व मुर्शिद हुजुर सैयदुल ओलमा हजरत अल्लामा सैयद आले मुस्तफा रह्मतुल्लाह अलैह।

खिलाफतको तारिखः १३९४ हिजरी अर्थात सन् १९७४, वि.सं. २०३०।

२) पिर व मुर्शिदका भाइ, अह्ले सुन्नतका तारा, हुजुर अह्सनुल ओलमा सैयद मुस्तफा हैदर हसन रह्मतुल्लाह अलैह।

खिलाफत को तारिखः सव्वाल १४०३ हिजरी अर्थात जुलाइ सन् १९८३ र वि.सं. २०४० असार।

३) जानशिने मुफ्ती ए आजमे इस्लाम, शेह्जाद ए आलाहजरत हुजुर ताजुश्शरियह हजरत अल्लामा मुफ्ती अख्तर रजा खाँ।

खिलाफतको तारिखः १८ जुमादिल उला १४१४ हिजरी अर्थात २ नोवेम्बर सन् १९९३ इस्विर वि.सं. २०५० कार्तिक १७ गते।

४) शेह्जादए हुजुर सैयदुल ओलमा, अफ्जलुस शोअरा हजरत अल्लामा सैयद आले रसुल हस्नैन मियाँ नज्मी रह्मतुल्लाह अलैह ।

खिलाफतको तारिख : २८ जुमादिल उला १४०६ हिजरी अर्थात ८ फेब्रुअरी सन् १९८६ इस्विर वि.सं.२०४२ माघ २५ ।

५) शेह्जादए कुत्बे मदिना हजरत अल्लामा मुहम्मद फज्लुर रह्मान मदिना शरिफ ।

तारिख खिलाफतको: जिल्हिज्जा १४१३ हिजरी अर्थात मे सन् १९९३ र बैशाख २०५० वि.सं. ।

६) पिरे तरिकत औलादे रसुल हजरत मौलाना सैयद अहमद अलि रज्वी अज्मेर शरिफ ।

खिलाफतको तारिख : १४०६ हिजरी अर्थात सन् १९८६  इस्विर वि.सं. २०४२ ।

७) काजी ए आजमे देह्ली हजरत अल्लामा मुफ्ती मुहम्मद मियाँ समर दह्लवी ।

खिलाफतको तारिख : २१ रबिउष्षानी १४०६ हिजरी अर्थात २० जनवरी १९८६  इस्वि वि.सं. २०४२ माघ ८ ।

उल्लेखित सबै मशाइखे किराम हाम्रा सरका ताज हुन् र सबै को सिल्सिला हुजुर सल्लल्लाहु अलैही वसल्लम संग बिना कुनै रोक पुग्ने गर्दछ ।

## मुरिद

हुजुर शेर ए नेपाल ति महान् ब्यक्तिहरु मध्य थिए जस माथि समयले पनि गर्व गर्ने गर्दछ । मुरिदहरुलाई पनि गर्व छ कि जस्को हाथमा हामी मुरिद भएका छौ त्यो एउटा आरिफे कामिल र शरीअत अनुशार चल्ने आलिम हुन् । एउटा साचो र असल पिर बन्नको लागि शरीअतले जति पनि शर्त राखेको छ त्यो

सबै उहाँ माथी निःशन्देह थियो त्यसैले त देश र बिदेश चारै तर्फ हजारौको शंख्यामा उहाँ रह्मतुल्लाह अलैहका मुरिदहरु छन् । हुन त त्यो पिरलाई पिर पनि कसरी भन्न सकिन्छ जस्लाई शरिअत, कुरआन र हदिष बारे ज्ञान नै नहोस् । जो न आफै आलिम छ त्यस्ले के अमल गर्ला र जस्ले अमल नै गर्दैन त्यो कसरी पिर हुन सक्ला, त्यो संग खुराफात, फित्ना, जिहालत फैलाउने बाहेक अरु के नै आशा राख्न सकिएला र ? तर अल्हम्दोलिल्लाह हुजुर शेर ए नेपाल एउटा यस्ता ब्यक्ती थिए जस्ले जीवनकाल भरी किताब र सुन्नत पढे पनि र पढे अनुसार त्यो माथि अमल पनि गरे ।

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह मुरिद बनाउने समयमा एक देखि पाँच सम्मका कल्मा, इमाने मुज्मल र इमाने मुफस्सल पढाउनु हुन्थ्यो । इस्लाम र इमान, सहि अकिदा र मस्लके आला हजरत माथि जिवन भरि अडिकताका साथ कायम रहने वचन लिनु हुन्थ्यो । बैअत लिदा मुरिदहरुको हालत र तरिकाहरु माथि पनि नजर थियो जसरी कि अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले बैअत लिदा कहिले इस्लामको लागि बैअत र कहिले मुस्लिमहरुको राज्यको लागी बैअत लिने गर्नुहुन्थ्यो र कहिले जिना, रक्सि र अरु नराम्रा कार्यबाट बच्ने बैअत पनि लिनु हुन्थ्यो त्यहि तरिका उहाँ रह्मतुल्लाह अलैहको पनि थियो ।

सन २०१४ मा म (साजिद अहमद) बकरइद पछिको तेस्रो हफ्ता जामिया हनफिया गौषियाको चार भित्ता भित्र दिने इस्लामको ज्ञान प्राप्तीका निम्ति मस्जिद पछाडी रहेको हजरतको कोठा छेउमा एकान्तमा बसि रहेको थिए । समय मगरिबको नमाज पछिको थियो, हाफिज नफिस साहब उर्दु किताब पढ्ने भनेर हजरत सामु उपस्तिथ थिए । त्यही समयमा वहाँ कै कोइ चिन्ने बालक आएर मुरिद बन्ने इच्छुकता प्रकट गर्यो सोही समयमा एकान्तमा बसि रहेको मलाई हजरत शेर ए नेपालले बोलाएर हाफिज नफिसका साथ उर्दु र अरबीको केही किताब पढाउनु भयो र यो पढ्ने क्रम सोही बर्षको रबिउल अव्वलको

बिदा सम्म रह्यो। अल्लाहको शुक्र कि त्यति बेला नै मैले वहाँको हातमा हात दिएर सिलसिला ए कादिरीया बरकातियामा प्रवेश गरेको थिए।

## उपनाम र उपाधीहरु

यस्ता फकिह जस्लाई संसारको कहिले पनि परवाह भएन, यस्ता आलिम जस्ले कुनै पनि गलत कार्यलाई कहिले पनि चाहेनन, ज्ञान हिक्मतका भण्डार, मेरा सरदार, मेरा प्रिय गुरु हुजुर शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकी बरकाती अलैहिर रह्मतो वर रिजवानको व्यक्तित्व यति महान् थियो कि समयमा महान नाम राखेका, हरेक मनमा बसेका, ठुला र प्रख्यात इस्लामी बिद्वानहरुले उहाँलाई ठूलो प्रतिष्ठा प्रदान गर्नुभयो। दुआको सुन्दर फुलहरुले हजरत शेर ए नेपालको मन र मस्तिष्कलाई सदैव सुगन्धित बनायो। वहाँको बोली र कार्यको एकल अडिगता, दिनी र समाजी कारनामाहरुले गर्दा वहाँलाई थुप्रै ठुला र बिशाल उपाधिहरु दिएर वहाँको प्रतिष्ठामा झन् धेरै इजाफा गराइदिनु भयो। वहाँलाई हौसला प्रदान गर्ने, मन बाटै दुआ र साथ प्रकट गर्ने मध्य मारेह्रा र अज्मेर शरिफका आले नबि, बरेलीका मशाएख, हरमैन शरिफका शैखैन, मिस्र र अरबका आलिमे दिन, समयका ठुला बिद्वान र आफ्ना शिक्षकहरु पनि पर्दछन् जस्ले भित्री मनबाट वहाँको कार्यलाई स्विकार्दै यस्ता उपाधी प्रदान गर्नु भयो :

## लश्करे इस्लाम (इस्लामको फौज)

एउटा व्यक्तिलाई सिपाही भनिन्छ भने थुप्रै सिपाहीको एउटा समूहलाई फौज भनिन्छ। निश्चित रुपमा शेर ए नेपाल पूरा एउटा फौजका बराबर थिए जस्ले आफ्नो जीवनकालमा त्यो कार्य गरेर देखाए जस्लाइ धेरै व्यक्ति मिलेर पनि गर्न सक्दैन थिए। यो त्यो उपाधी हो जसबाट उहाँको प्रिय शिक्षक हुजुर हाफिजे मिल्लत मुहद्दिसे मुबारकपुर अलैहिर रह्माले उहाँलाई याद गर्नुभयो। जब

उहाँले जामीआ अशरफियाबाट आफ्नो शिक्षा पूरा गरेर आफ्नो देश फर्कनु भयो तब हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई वहाँको जिम्मेवारी सुम्पिदै हुजुर हाफिजे मिल्लतबाट यो उपाधी प्रदान गरिएको थियो ।

## शेर ए नेपाल

आज मुफ्ती जैश मुहम्मद सिद्दिकी रह्नतुल्लाह अलैहलाई वहाँको असल नाम भन्दा शेर ए नेपालको नामबाट सबैले चिन्दछन् । किताबको अघिल्लो भागमा, एउटा मुनाजरा बारे बताइएको छ जुन भारतको बासुपटी भन्ने बजारमा भएको थियो । सोही मुनाजरामा उपस्तिथ हुजुर शारह बुखारी, हुजुर बह्रुल उलुम, अमिने शरिअत मुफ्ती रिफाकत हुसैन, शेर ए बिहार मुफ्ती मुहम्मद अस्लम मक्सुद अलैहिर रह्मतो वर रह्मान आदि जस्ता ठुला बिद्वानबाट त्यो दिन शेर ए नेपाल जस्तो ठूलो र प्रतिष्ठावान उपाधी प्राप्त गरे । त्यो दिनमा भएको उहाँको ललकार र हक प्रतीको अडिगतालाइ सम्पुर्ण ओलमाले सराहेका थिए जस्को बारेमा खुलस्त रुपमा यो किताबको पहिलो भागमा वर्णन गरिएको छ ।

## काजी ए नेपाल र मुफ्ती ए आजमे नेपाल

यो उपाधी वि.सं २०३० अर्थात रबिउन नुर १३९४ हिजरीमा भएको विशाल तीन दिनको सरकारे मदिना कान्फ्रेन्समा आफ्नै पिर व मुर्शिद हुजुर सैयदुल ओलमा अलैहिर रह्मा, हुजुर हाफिजे मिल्लत र सैयद मुजफ्फर हुसैन किछौछवी रह्मतुल्लाही अलैहिम अज्मइन द्वारा प्रदान गरिएको थियो । सम्पुर्ण ओलमाले आफ्नो आँखाबाट वहाँ को दिनि कार्यलाई देखेर यो ठूलो उपाधी प्रदान गर्नुभयो । फेरि १४२८ हिजरी अर्थात सन् २००७ मा जब उहाँ रह्मतुल्लाह अलैह मिस्रको सेमिनारमा जानु भएको थियो । तब तपाईको ज्ञान र तक्वाबाट प्रसन्न भएर मिस्रका ठुला ठुला ओलमाहरुले उहाँलाई “मुफ्ती ए आजमे नेपाल” को उपाधीबाट याद गर्नु भयो जस्को निशन्देह वहाँ लायक हुनुहुन्थ्यो ।

## मुहद्दिषे नेपाल

हजरत शेर ए नेपालको हदिष बारे ज्ञान र हदिष पढाउने र प्रष्ट पार्ने खुबी बारे सम्पुर्ण ओलमाका साथ साथै अवामले पनि जान्दछन् । खास गरेर त्यो शिक्षक ओलमा जस्ले उहाँलाई हदिष र उसुले हदिषको किताब पढाउनु भयो । वहाँहरुलाई हजरत शेर ए नेपालको हदिष प्रति रुचि को आफ्नो तजुर्बा अनुसार धेरै ज्ञान पहिलै भइ सकेको थियो । अब जुन विद्यार्थी को खुबी बारे शिक्षकले नै बयान गरोस् त्यो विद्यार्थीको हदिष बारेको ज्ञान निशन्देह नै बयान भन्दा ठूलो रहेको प्रष्ट रुपमा देखिन्छ । नेपालको सबै भन्दा ठूलो मुहद्दिष (मुहद्दिषे नेपाल) जस्तो गरिमामय उपाधीबाट हजरत शेर ए नेपाललाई उहाँकै शिक्षक हजरत अल्लामा मुफ्ती सैयद मुहम्मद आरिफ रज्वी शैखुल हदिष जामीआ मनजरे इस्लाम बरेली शरिफबाट प्रदान गरिएको थियो । निश्चित रुपमा तपाई जस्तो हदिषमा ज्ञान राख्ने नेपालमा अरु कोइ नभएकाले मुहद्दिषे आजमे नेपाल को ताज पनि वहाँ कै सरमा सजाइएको थियो ।

## शेर ए रजा

नेपालको एक मात्र व्यक्तित्व हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको थियो जस्ले मस्लके हक र मस्लके आला हजरतलाई फैलाउन र त्यस्लाई बढाउन विभिन्न प्रकारका कुरबानी दिए र यो मस्लकमा बिरोधीबाट उठाइएको हरेक गलत दोष र आरोपलाई कुरआन र हदिषको दलिलबाट हटाउदै गए । हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले लिखित, मौखिक र मुनाजराको रुपमा प्रष्ट पारेका थिए कि मस्लके आला हजरत कुनै नयाँ मस्लक नभइ बुजुर्गाने दिनहरु द्वारा बताइएको र इस्लाम बारे सहि सोच प्रदान गर्ने मस्लक हो । यसै अडिगताका साथ सहि तस्विर प्रस्ट रुपमा देखाएकाले शहजाद ए सैयदुल ओलमा, हजरत अल्लामा सैयद आले रसुल हस्नैन नज्मी मियाँ अलैहिर रह्मा मारहरा शरिफ ले २०२१ अपरिल सन् २०११ मा शेर ए रजाको उपाधीहरुबाट सम्बोधन गर्नु भएको थियो ।

## मुनाजिरे इस्लाम

यो विशाल उपाधी हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई सदरुल ओलमा, एह्ले सुन्नतको वकार हजरत अल्लामा मौलाना मुफ्ती मुहम्मद तह्सिन रजा खाँ अलैहिर रह्मा बरेली शरिफले २९ रजब १४१२ हिजरीमा प्रदान गर्नु भएको थियो। सदरुल ओलमाको कलमबाट लेखिएको यो उपाधी यति चर्चित भयो कि लगभग सम्पुर्ण ओलमा ले यहि उपाधीबाट हजरत शेर ए नेपाललाई स्मरण गर्नु भयो।

## ताज़ुल ओलमा

यो ठूलो र प्रतिष्ठावान उपाधीबाट हजरत शेर ए नेपाल अलैहिर रह्मालाई अमिने शरिअत मुफ्ती ए आजमे हालेन्ड द्वारा प्रदान गरिएको थियो। एउटा जल्सामा दुवै बुजुर्ग बसिरहेका थिए, मुफ्ती ए आजमे हलेन्डलाई बयानको लागि बोलाइएकोले वहाँ बयान गर्ने क्रममा हम्द र दुरुद पछि हजरत शेर ए नेपालको जीवन बारे केही प्रकाश पार्दै मुफ्ती ए आजमे नेपाल, काजिउल कुजात फि नेपाल र ताजुल ओलमाको उपाधीबाट याद गर्नु भएको थियो।

यस्का साथ साथै हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाइ फातहे नेपाल, नकिबे अह्ले सुन्नत, शेर ए सुन्नीयत, शेर ए मिल्लत, शेर ए हक, काजि ए आला नेपाल आदि जस्ता ठुला र प्रतिष्ठावान उपाधीहरुबाट ओलमाले याद गर्नु भयो। यो नै उहाँको अल्लाहको दरबारमा प्रिय हुनुको सबुत हो।

यिनिहरु मध्ये केही उहाँका शिक्षक हुन् भने केही उहाँलाई आफ्नो सिल्सिलाको खिलाफत दिने व्यक्तित्वहरु। यो सम्पुर्ण उपाधीको उहाँ हक्दार पनि हुनुहुन्थ्यो।

## शेर ए नेपाल पहाडमा

म (साजिद अहमद) भन्दछु कि जति दिनको कार्य शेर ए नेपाल अलैहिर रह्माले पहाडी भागमा गर्नु भएको छ निःशन्देह त्यति काम आज सम्म

कसैले नगर्न सकेको थियो न अल्लाहको तौफिक बिना आउने समयमा पनि कसैले गर्न सक्नेछ। निःशन्देह अल्लाहको निकै फजल र करम थियो हजरत रह्मतुल्लह अलैह माथि नत्र खुलेआम कुनै बातिल फिर्काको रद गर्ने ताकत आजको समयमा धेरै व्यक्ति संग हुदैन।

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले जसरी तराईका विभिन्न भुभागहरुमा दिनको दावत र तब्लिगको कार्य गरेका थिए त्यसरी नै पहाडको गाउँ गाउँमा इस्लामको महानता र मस्लके आला हजरतको साचो पाथलाई खुलेर प्रष्ट पारेका थिए। उहाँ रह्मतुल्लाह अलैहले पहाडी मुस्लिमहरुको इमान र अकिदालाइ बचाउनु भयो र हर एक ठाउँमा इस्लामको साचो प्रेम गर्ने सिपाहीहरुलाई ओलमा र अइम्मा प्रदान गर्नु भयो।

जुन समयमा उहाँ रह्मतुल्लाह अलैहले पहाड तर्फ आफ्नो कदम बढाउनु भयो त्यति बेला पहाडमा तब्लिग गर्नको लागि नेपालका ओलमाको चहलपहल त्यति धेरै थिएन। तराईमा जुन् ओलमा बस्दथे उनिहरुलाई कसैले चिन्दैन थिए। तर त्यो समयमा पनि अल्लाह तआलाले वहाँलाई त्यो प्रतिष्ठा र सम्मान दिलाउनु भयो कि पहाडको हरेक सुन्नी बच्चा देखि बुढाका बोली मा सुन्नीयतको बारेमा चर्चा हुदा सर्वप्रथम हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह कै नाम आउन थाल्यो। हुन त धेरै व्यक्तित्वहरु थिए जस्ले हजरतलाई दिने इस्लाम र सुन्नीयतको तब्लिगको लागि मद्दत गर्नु भएको थियो त्यसै महान् र सहयोगी व्यक्तित्वमा एउटा नाम मर्हुम हाजी सैयदिन (अल्लाह पाक वहाँलाई जन्नतुल फिर्दोसमा उच्च मकाम दिउन) को नाम पहिलो पान्ना मा आउने गर्दछ।

खलिफ ए हुजुर शेर ए नेपाल मौलाना इकराम अजहरी साहबको भनाइ रहेको छ किः जब शुरु शुरुमा हजरत शेर ए नेपाल नारायणघाटको भुमिमा आउनु हुन्थ्यो तब मर्हुम हाजी सैयदिन राती एक्लै वहाँलाई लिन जान्द्र हुन्थ्यो र बाटोमा आफै एक तर्फ नारे तक्बिर भन्द थिए भने अर्को तर्फबाट आफैले अल्लाहु

अक्बर भन्ने गर्दथिए। थोपा थोपा मिलेर सागर बन्छ भने झै यहि एक एक व्यक्ती मिलेर जब विशाल अह्ले सुन्नतको एउटा समूह बन्यो त्यहाबाट यस्ले कुन रुप लियो र कसरी शेर ए नेपालको नाम हरेक नेपाली सामु पुग्यो भन्ने कुरा कुनै व्यक्तिबाट पनि लुकेको छैन।

नेपालको मेचीमा रहेको झापा जिल्ला देखि लिएर कंचनपुर सम्मको हरेक ठाउँमा शेर ए नेपाल संग प्रेम गर्ने व्यक्ती छन् र सदैव रहने छन्। जब पहाडी मुस्लिमहरुले पहाडको भागहरुमा इल्मे दिन सिखाउने दर्खास्त पेश गरे तब हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले आफ्ना विद्यार्थीहरुलाई विभिन्न भागहरुमा पठाएर त्यहा उठ्ने हरेक दिनि समस्याको समाधान गराउनु भएको थियो र अहिले पनि धेरै ओलमाले सोही कार्य गर्दैछन्। केही ठाउँमा आफ्ना विद्यार्थी नत्र आफू नै पुगेर त्यहाको ब्यक्तीहरुलाई दिन ए इस्लाम संग नजिक गराए। जहाँ मकतब थिएन त्यहा मकतब बनाए, जहाँ मस्जिदको आवश्यकता थियो त्यहा मस्जिदको निर्माण गराउनु भयो, जहाँ मदरसाको खाचो थियो त्यहा मदरसाको निर्माण गराए, कुनै ठाउँ जस्मा मुस्लिमहरु संग पैसा नभएको कारणले एउटा इमाम राख्ने हिम्मत नभएको ठाउँमा हजरत शेर ए नेपालले आफ्नो पैसा दिएर इमामलाई त्यो भागमा पठाउने कार्य गरेका कुरा पनि कसै संग लुकेको छैन।

अह्ले सुन्नत पहाडमा कायम छ तिम्रै दैनले

मुफ्ती ए आजम नेपाल हजरते शेर ए नेपाल !

## हजरत शेर ए नेपाल र हर्मैनको दर्शन

पुरा धर्तिमा दुई शहरहरु यस्ता छन् जस्लाइ अल्लाह तआलाले त्यो प्रतिष्ठा र सम्मान दिनु भएको छ , त्यो जस्तो पुरै भुमिमा बाकी कुनै ठाउँ छैन , जुन ठाउँमा सदैव अल्लाह तआलाको नुरको घेरा र जहाँ सदैव बर्कत र रहमतको बर्सात हुने गर्दछ। त्यो भुमी हो मक्का-मुकर्रमा र मदिना-मुनव्वरा, जस्को दर्शनको लागि हरेक मुस्लिम र अल्लाह को नबि को प्रेमी सदैव प्राथना गर्ने गर्दछन् । हरेकले सोच्दछन् कि कहिले त्यो प्यारो घडी आउने छ र मेरो मुर्झिएको भाग्य खुल्नेछ। खानए काबाको दर्शन्, त्यस्को तवाफ गर्ने सआदत, सफा मर्वाको सइ, मुज्दल्फा र अरफातमा रुक्नु, मिनामा बस्नु, मकामे इबराहिमको दर्शन्, जमजम जस्तो पवित्र पानी पिउनु, हज्रे अस्वदलाई चुम्ने सौभाग्य फेरि कआबाको कआबा मेरो नबि करिम सल्लल्लाहु अलैही वसल्लमको आराम गर्ने ठाउँ, त्यो शहरमा घुम्ने मौका, त्यहाँका पहाड, त्यहाँका बजारको चहलपहल, त्यहाँका भित्ता र ढोका, गुम्बद र मिनार, जन्नतको टुक्राको दर्शनको तमन्ना कुन व्यक्तिको हुदैन र !

देखाइदेउ ए अल्लाह त्यो मदिना कस्तो शहर हो

जहाँ बिहान साभ्क हर घडी तिम्रो रहमत बर्सिन्छ।

हजरत शेर ए नेपाल, मुफ्ती ए आजमे नेपालको पहिलो हज र उमराको लागि १४१३ हिजरी अर्थात सन १९९३ मा सफर गर्नु भएको थियो । हज पछि मदिना मुनव्वरमा उपस्थित भएर अदबका साथ सलाम पढ्नु भयो र तल रियाजुल जन्नतमा बसेर एक वजुबाट पूरा कुरआन पढ्नु भयो। यो क्रममा उहाँ रह्मतुल्लाह अलैहले केही अंबिया ए किराम, हजारौ सहाबा र ताबइने किराम र औलिया र स्वालिहिनको मजार शरिफको दर्शन् गर्ने सौभाग्य पनि प्राप्त गर्नुभयो।

## सउदि पुलिस संग बहस

पहिलो हज र उमराह सफरको बेला जब उहाँ मदिना शरिफ पुग्नु भयो त्यहा जन्नतुल बकिअ कबरिस्तानमा केही पुलिसहरु हात उठाएर दुआ गर्नेलाई यो शिर्क हो, यो बिदअत हो भन्दै सो कार्यबाट रोक्दै थिए। त्यस्लाई वास्ता नगरि जब हजरत शेर ए नेपालले फातिहा पढेर दुआको लागी हात उठाउनु भयो, तब तिनै पुलिसहरु मौता ! मौता अर्थात दुआ नगर यिनिहरु मुर्दा हुन् मुर्दा हुन् (मआजल्लाह) भन्न थाले। यति सुन्ने बित्तिकै उहाँ रह्मतुल्लाह अलैह लाइ एकदमै रिस उठ्यो र भन्नुभयो "तिमीहरु मौता मौता ! अर्थात कबरमा आराम गरि रहेका सहाबा, ताबइन र अल्लाहको प्यारा बन्दाहरुलाइ मुर्दा भन्दैछौ जबकि कुरआन करिममा वला तकुलु लिमइ युक्तलु फि सबिलिल्लाही अम्वात बल अह्याउ वला किल्ला तश्उरुन (सुरह बकरा) भनिएको छ। कुरआनले मुर्दा भन्नु त परै जाओस् मुर्दा सोच्नबाट पनि रोकेको छ अनि तिमी मुरदा भन्दै हिडछौ, कस्तो मुस्लिम हौ तिमी ?

तपाईको यति रिस र कुरआनको दलिल सुनेर त्यो पुलिस पसिना पसिना भयो र त्यहाँबाट बिस्तारै निस्कियो। हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले ढुक्कका साथ दुआ पढेर त्यहाबाट फर्किनु भयो। फेरि भोलि पल्ट वहाँ जन्नतुल बकिअ पुग्दा कसैले पनि केही भनेनन्।

## दोश्रो पल्ट

हजरत शेर ए नेपालले २० शाबान १४३४ हिजरी अर्थात ३० जुन २०१३ र १६ असार २०७० वि.सं. मा हरमैन शरीफैनको लागि प्रस्थान गर्नु भयो र १० दिन मक्का शरिफ र बाकी ११ दिन मदिना शरिफमा व्यतित गर्नु भयो र ११ रमजान १४३४ हिजरी अर्थात २१ जुलाइ सन् २०१३ र ६ साउन २०७० वि.सं. मा फर्किनु भयो।

## तेस्रो र चौथौ र अन्तिम पल्ट

नबि ए पाक सल्लल्लाहु अलैही वसल्लमको दरबारको दोश्रो दर्शन पछि तेस्रो पल्ट रबिउल अव्वलको १४३७ हिजरीमा उमराहको लागि हरमैन शरिफैन पुग्नु भयो । चौथौ पल्ट शाबानको महिना १४३८ मा पुन उमराको लागि सफर गर्नु भयो । अन्तिम पल्ट १४४० हिजरी अर्थात २०१९ ईस्वीमा सफर गर्नु भयो ।

## शेर ए नेपालको व्यक्तित्व ओलमाका नजरमा

### हुजुर सैयदुल ओलमका छोरा, आलिमे मकबुल सैयद शाह आले रसुल हस्नैन नज्मी मियाँ अलैहिर रहमा सज्जादा नशिन सरकारे कलाँ खानकाहे आलिया कादरिया बरकातिया (मारहरा शरिफ)

नहमदहु व नुसल्ली अला रसुलेहिल करिम

अम्मा बअद !

वह सुए लालह जार फिर्ते हैं

तेरे दिन ए बहार फिर्ते हैं

सौरे मह सुन् कर तुझ तक मै दवा आया

साकी मे तेरे सद्के मै दे रम्जाँ आया !

जब मलाइ थाहा भयो कि मेरा आदरणीय बुबा हुजुर सैयदुल ओलमा आफ्नो जीवनकालको अन्तिम समयमा नेपाल भ्रमणमा आउनु भएको थियो जहाँबाट गए पछि मेरो बुवाको इन्तेकाल भयो । त्यो अन्तिम भ्रमण थियो मेरो आदर्श बुवाको । मैले सोचे कि मेरो बुवा ले नेपाललाई किन चुन्नु भयो ? नेपाल भरीबाट शेर ए नेपाललाई नै किन चुन्नु भयो ? जब मैले सोच बिचार गरे तब थाहा पाए कि एउटा मुस्तफा सल्लल्लाहु अलैही वसल्लम ले सिद्दिकलाई चुन्नु भएको थियो अब आले मुस्तफा (आफ्नो बुवा तर्फ इशारा

गर्दै) ले सिद्दिकी (हुजुर शेर ए नेपाल)लाई चुन्नु भएको छ।

अब बुवा ले चुन्नु भएको, मेरो आदरणिय बुबाले चुनेका, बरकाती खान्दानका चस्मो चिरागले चुन्नु भएका निश्चित रुपमा यस्तो उस्तो हुन सक्दैन। म आज तपाईहरु सबैलाई गवाह बनाएर यो कुराको घोषणा गर्दछु कि हुजुर जैश मुहम्मद साहब शेर ए नेपाल को बिरोध गर्ने व्यक्ति हामी बरकातीहरुको बिरोधी हो र त्यो बर्कात खानदानको बिरोधी हो। त्यो ब्यक्ति संग हामी युद्धको घोषणा गर्दछौ। म (नज्मी मियाँ) मुफ्ती साहबलाई यो कुराको भरोसा दिलाउदछु कि मुफ्ती साहब आफ्नो मिशन अगाडि बडाउदै जानुस्। पूरा बर्कात खान्दान तपाईको साथ छ। तपाईको जहाँ पसिना झर्नेछ त्यहाँ मेरो रगत झर्नेछ।

सैयदको रगत सस्तो हुदैन र त्यही माथी नज्मीको रगत। मेरो रगत को ग्रुप O Negative हो। यो हजारौ व्यक्तिहरुमा एक व्यक्तिमा मात्र पाइन्छ। यति महँगो रगत म आफ्नो जीउमा बोकेर हिड्दछु। नबिको सन्तानको त रगत नै महँगो हुन्छ तर त्यो मध्य पनि धेरै महंगो मेरो रगत छ जस्लाइ म तपाईलाई सुम्पिदैछु। जुन समय तपाईलाई आवश्यकता हुनेछ नज्मीको सन्तान तपाईको लागि कुरबान हुनेछ। म अस्लि हो नक्कलि हैन। मेरो बुवाले तपाइलाई अप्नाउनु भएको छ अर्थात अब हजुरलाई अप्नाउनु यो मेरो कर्तब्य हो। अल्लाहको हबिब सल्लल्लाहु अलैही वसल्लम तपाई को साथमा हुनुहुन्छ, अल्लाह तपाईको साथमा हुनुहुन्छ। यस्तो भाग्य हरेकको हुदैन। मानिसहरु त धेरै घुम्दैछन्, मुफ्तका मुफ्तीहरु पनि घुम्दैछन्।

तर कुरा यो हो कि आज हरेक व्यक्तीले सबुत माग्दछ र तपाईले त्यो सबुत खान्काहे बरकातको रुपमा दिनु भएको छ र मदरसा हनफियाको रुपमा प्रदान गर्नु भएको छ। मदर्सा हनफिया गौषिया को यो (फारिगिन हाफिज, कारी, आलिम) अल्लाहका सिपाहीहरु बसि रहेका छन्, यो तपाई कै कार्यबाट निक्लेका हुन्। यो दिनको ज्ञानको सफर जहाँ सम्म यिनिहरु अगाडि बढ्नेछन् सवाब पाउने छन र यिनिहरुले पाएको सवाब तपाईले पाउनुहुनेछ।

म निकै खुशी छु कि मेरो बुवाको रुहानी छोरा, मेरो भाइको दिपबाट पनि दिप जल्दैछ र यो बरकाती दिप हो । यस्को उज्यालो यहाँबाट भारतको कश्मिर देखि कन्याकुमारी सम्म फैलिएको छ । अल्लाह तआला शेर ए नेपालका कार्यहरुको धुम नेपाल सम्म मात्र हैन बल्की बोर्डर पारी पनि पुर्याउँछन् । इन्शा अल्लाह ! त्यो भन्दा पनि अगाडि पुग्ने छ । अहिले त निक्ले कै छन् , बल्ल यिन्को रङ्ग संसारले देखेको छ । इन्शा अल्लाहु तबारक वतआला हेरौ कि कसरी शेर ए नेपालले संसारलाई बद्लिने (मुसक्खर) गर्ने छन् ।

अल्लाह तआला संग मेरो दुआ छ कि जुन खानकाहे बरकाती को उद्धाटन भएको छ यो खानकाहे बरकात (मारेहरा शरिफ) को सहि अर्थमा अक्स बनोस् । इन्शा अल्लाह ! त्यो सात कुतुब जो एक छतका तल सुतेका छन् ती बुजुर्गहरुको फैजान जारी रहोस् । आमिन !

## हाफिजे मिल्लत हजरत अल्लामा अब्दुल अजिज अलैहिर रह्मा मुहद्दिषे मुरादाबादी बानी अल्जामीअतुल अश्रफिया मुबारकपुर

मौलाना जैश मुहम्मद सिद्दिकी एक काबिल आलिमे दिन हुन् । उनी संग मेरा धेरै आशाहरु रहेका छन् । मलाई आशा छ कि यिनीबाट त्यो भुभागमा सुन्नीयतको तब्लिग र त्यसको इशाअत हुनेछ । (जल्सा ए सरकारे मदिना कान्फ्रेन्स रबिउल अव्वल १३९४ हिजरी)

## ताजुश्शरिया, काजिउल कुजात फिल हिन्द, जानशिने हुजुर मुफ्ती ए आजम मुफ्ती अख्तर रजा खाँ अलैहिर रह्मा बरेली शरिफ ।

यहाँ (जामीआ हनफिया गौषियाको भुमी) मलाइ निकै खुशी छ कि हजरत शेर ए नेपाल जैश मुहम्मद यो एक व्यक्ति हुन् । यिनि जैश मुहम्मद हुन् जस्तो उन्को नाम छ त्यस्तै नाम अनुसार जैश मुहम्मद हुन् । मुहम्मद सल्लल्लाहु

अलैही वसल्लम का फौज, मुहम्मदुर रसुलुल्लाह को दिनको सिपाहि हैन बल्की दीनको फौज हुन् । यो ठाउँमा जुन इन्ले मस्लके आला हजरत को पहिचान बाकि राख्नु भएको छ, यो पहिचान तिमीहरुले पनि बाकी राख । इन्ले मस्लके आला हजरत को जुन झणडा उठाएका छन् त्यसै तल बस । आज जो इनिहरुको झण्डा को तल रह्ने छ भोलि त्यो मुहम्मदुर रसुलुल्लाहको झण्डाको तल रह्ने छ ।

## काइदे एह्ले सुन्नत अल्लामा अर्शदुल कादरी अलैहिर रह्मा (जम्शेदपुर)

देश नेपालमा मस्लके आला हजरतको एकल पास्बान शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकी हुन् ।

## हुजुर जमाले मिल्लत अल्लामा जमाल रजा खाँ (बरेली शरिफ) ।

कुतुबे मदिना का छोरा मौलाना फज्लुर रह्मानले भन्नुभयो कि एउटा सिल्सिला ४ ओटा वास्ताका साथ रसुलुल्लाह सल्लल्लाहु अलैही वसल्लम संग मिल्दछ । त्यो सिल्सिलाको खिलाफत र इजाजत शेर ए नेपालले पाउनु भएको छ । यो सिल्सिलाए मुअम्मरिया हो जस्को इजाजत मैले पनि पाएको छु । शेर ए नेपालको दामन समात्छौ भने गौषे आजमको वसिला र ख्वाजा गरिब नवाजको वसिलाबाट नबि ए पाक सल्लल्लाहु अलैही वसल्लमको दरबार सम्म पुग्ने छौ र पाँच वास्ताबाट सिल्सिला ए मुअम्मरिया मा हाजिर हुनेछौ । ओलमा नबिहरुका वारिष हुन् अर्थात जुन कार्य अल्लाह तबारक व तआलाको बाटो देखाउने र सैतानको जाल र धोकाबाट बचाउने कार्य नबिहरुको थियो । त्यहि काम अल्लाहको आदेशबाट हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले आफ्नो उम्मतको ओलमाको हवाला गर्दिए । अब जहाँ शेर ए नेपाल हुने छन् त्यहा कुनै देओबन्दी शैतानको धोका र जाल हुने छैन, यदि देओबन्दी वहाबी

या सुल्हे कुल्ली छन् । निश्चितरुपमा थाहा पाउन कि शेर ए नेपाल हाम्रा हुन् र जे जस्तो उन्को छ त्यो हाम्रै हो ।

म (जमाल रजा) आलाहजरतको जुत्तालाइ चुम्दै भन्दैछु, मुफ्ती ए आजमको नालैनलाई चुम्दै भन्दै छु कि बरेली शरीफ का ओलमा र मशाइखको कार्यको हक यदि नेपालको भुमीमा कसैले गरिरहेका छन् भने त्यो शेर ए नेपालको व्यक्तित्व हो । जो उन्को मुरिद हो त्यो हाम्रो मुरिद हो र जो हाम्रो मुरिद हो त्यो उन्को मुरिद हो ।

मुसल्मानहरु ! एउटा आलिमे दिन तरिकतमा पनि तिम्रा मार्गदर्शक हुन् र शरीअतमा पनि तिम्रा रहबर हुन् ।

## हजरत अल्लामा सैयद आरिफ मिया साहब किब्ला ।

हजरत मौलाना मौसुफ (शेर ए नेपाल) ले हर एक मसअला मा एक जिम्मेवार तरिकाले कलम उठाउनु भएको छ जस मध्य केही ठाउँमा त निकै उत्सुकताका साथ मुखबाट सलाम निक्लिने गर्दछ । अहम मसाइलको तह्किकमा उहाँ रह्मतुल्लाह अलैहले आफ्ना अस्लाफ खास गरि आला हजरत फाजिले बरेल्वी रह्मतुल्लाह अलैह को तह्किकलाई आफ्नो बुनियाद बनाएर जुन इस्तिद्लालका साथ जवाबमा सबुतहरु धेरै भन्दा धेरै प्रदान गर्नु भएको छ त्यो हजरत मम्दुह (शेर ए नेपाल) को ज्ञानको मकामलाई साबित गर्दछ । साथ नै प्रश्न सोध्ने ब्यक्तिको समस्याले गर्दा जे कुरा लेख्न छोडेका थिए त्यस्को उत्तर पनि निकै प्यारो र उत्कृष्ट ढंग ले प्रदान गर्नु भएको छ । हुन त व्यक्तिगत रुपले काजी ए नेपाल  संग वाकिफ नै छैन तर उन्को इल्म र उन्को तेज परख ले निकै करिबबाट देखेको छु । अन्ततः फतवा ए बर्कातमा तपाईले जुन बढाइबाट इलमी सबुत दिनु भएको छ त्यो एउटा मिषाल नै हो (ताषुर फतवा ए बरकात भाग २) ।

## शम्सुल ओलमा हजरत मुफ्ती शम्सुल हक अलैहिर रह्मा ।

हजरत मुफ्ती ए आजमे नेपाल को बारेमा केही व्यक्तिहरुले भन्दछन् कि सुन्नी आलिम माथि कुफ्रको फतवा दिदँछ्न् यो एउटा आरोप हो, यस्को कुनै असल छैन । मस्लके आलाहजरत माथि यदि मज्बुतीका साथ चल्ने इन्को इलाकामा इनि बाहेक अरु कोहि देखिन । म आफ्नो उमरबाट १० बर्ष शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकी ज्युलाई दिदैछु । जहाँ आला हजरतको नाम लिइयोस् र त्यो नाम सुनेर कोइ खुशि छैन भन्ने देखिन्छ भने बुझ कि केही गडबड छ र नेपाल मा शेर ए नेपालको नाम सुनेर जो व्यक्ति खुशि हुदैन बुझ कि केही गडबड छ ।

## शेहजादए सद्रुश्शरिअह, मुहद्दिषे कबिर हजरत अल्लामा जियाउल मुस्तफा साहब नायब काजिउल कुजात फिल हिन्द, घुषी ।

शेर ए नेपाल मुफ्ती जैश मुहम्मद एक मुत्तकी, पर्हेजगार र ठुला आलिमे दिन हुन् । आलिम होस् त शेर ए नेपाल जस्तो ।

## मुफ्ती ए आजमे हलेन्ड, अमिने शरीअत मुफ्ती अब्दुल वाजिद साहब अलैहिर रह्मा दरभङ्गा, बिहार ।

आजभन्दा ४० बर्ष अगाडीको कुरा हो जब १३९४ हिजरी रबिउल अव्वलको महिनामा मदरसा हनफिया को तर्फबाट एउटा विशाल जल्सा भएको थियो । जस्मा खिताब गर्नको लागि मारह्रा मुतह्हराका चश्मो चिराग सैयदुल ओलमा अल्लामा सैयद शाह आले मुस्तफा साहब सदर सुन्नी जमिअतुल ओलमा मुम्बइ, ज्ञान र हिक्मतका दरिया हाफिजे मिल्लत अल्लामा अब्दुल अजिज शाह मुहद्दिषे मुरादाबादी, समयका मुजाहिद सैय्यद मुजफ्फर हुसैन किछौछ्वी

आदि जस्ता ठुला ओलमा आउनु भएको थियो । त्यही समयमा नेपालको आकाशमा राम्रा आलिम, मौलाना हाफिज शाह जैश मुहम्मद सिद्दिकीको सुर्य उदाइ सकेको थियो । त्यस्को प्रकाश तराईको विभिन्न भाग हुँदै पहाडको चुच्चो सम्म चम्किन थाली सकेको थियो । त्यो जल्साको पुरा जिम्मा मेरो हात मै थियो । मेरो बिचारमा त्यो जल्सालाई नेपाली ईतिहासमा सबै भन्दा ऐतिहासिक जल्सा मानिएको छ । त्यही समयबाट त्यो मदरसाले "जामिआ हनफिया गौषिया" नाम पाएको थियो जो आज दिनदिनै तरक्कीमा पुग्दै गरेको छ । त्यही प्यारा र अनौखो स्टेजमा मलाई हुजुर हाफिजे मिल्लतले बोलाउनु भयो र भन्नुभयो "मौलाना जैश मुहम्मूद सिद्दिकी एउटा काबिल आलिमे दिन हुन् मेरो यिनीसंग धेरै चाहनाहरु जोडिएका छन । मलाई बिस्वास छ कि यिनीबाट नेपालमा सुन्नीयतलाई फाइदा पुग्ने छ त्यसैले तपाई यिन्को साथ दिराख्नु होला" मैले उत्तर दिए हुजुर म त उन्कै साथ मा त छु। हाफिजे मिल्लत ले भन्नु भयो "मैले आउने समयको लागि भनेको हुं" त्यसैले तब देखि अहिले सम्म म त्यसै आज्ञाको पालना गर्दै शेर ए नेपाल मुफ्ती जैश मुहम्मद सिद्दिकीको हरेक कदममा साथमा छु (१० जुमादिल आखिर १४३४ हिजरी अर्थात २१ अपरिल २०१३ मा लिखिएको ताषुर) ।

## हजरत शेर ए नेपालका खुबिहरु

- देश नेपालमा सबै भन्दा ठुलो प्रतिष्ठा पाउने पहिलो मुफ्ती हजरत शेर ए नेपाल नै थिए।
- नेपाली समाजको इस्लामी मसअला हल गर्ने पहिला काजि हजरत शेर ए नेपाल नै थिए।
- नेपालको पहिलो मुनाजिर ए अह्ले सुन्नत, जस्ले बदमज्हबहरुलाई सधै पराजित गरे र सदैव सत्यको दिपलाई जलाई राखेका हजरत शेर ए नेपाल नै थिए।
- नेपाली भुमीमा सबैभन्दा विशाल जल्सा "सरकारे मदिना कान्फ्रेन्स" सबैभन्दा पहिला गराउने हजरत शेर ए नेपाल नै थिए।
- नेपालमा सबै भन्दा पहिला ठूलो मदरसा "जामीआ हनफिया गौषिया" बनाएर चलाउने हजरत शेर ए नेपाल नै थिए।
- नेपालको भुमीबाट सर्वप्रथम भारतको सबै भन्दा ठूलो विश्व बिद्यालयको बार्षिक जल्सामा मिस्बाहियतको ताज लगाउने हजरत शेर ए नेपाल नै थिए।
- नेपालको तराई भागमा सबै भन्दा पहिला तीन तले मस्जिद बनाउने हजरत शेर ए नेपाल नै थिए।
- पहिलो नेपाली व्यक्ति जस्ले नेपालको इस्लामी ईतिहासमा सबै भन्दा धेरै इज्जत, प्रतिष्ठा पाए हजरत शेर ए नेपाल नै थिए।
- नेपालमा सबै भन्दा लेखिएको पहिला फत्वाको किताब "फतवा ए बरकात" जस्को लेखक हजरत शेर ए नेपाल नै थिए।
- नेपालको भुमीबाट सबै भन्दा पहिला बिदेशको इस्लामी प्रोग्राम र भ्रमणको लागि गएका हजरत शेर ए नेपाल नै थिए।

- नेपाली मुस्लिम समाज को प्रतिनिधित्व गर्दै मिस्रको सेमिनारमा सबै भन्दा पहिला भाग लिने व्यक्ति जस्को लेख र इस्लामी कार्यको तारिफ त्यहाका ठुला ठुला बिद्वानले पनि गरेका थिए त्यो हजरत शेर ए नेपाल नै थिए।
- नेपाली भुमीको पहिलो व्यक्ति जसको लागि अरब राष्ट्रबाट पत्रहरु आए हजरत शेर ए नेपाल नै थिए।
- नेपालबाट जामीआ अज्हर मिस्रमा पहिलो विद्यार्थी पठाउने हजरत शेर ए नेपाल नै थिए।
- इस्लाम र सुन्नीयतलाई फाइदा पुर्याउन नेपालमा सबै भन्दा पहिला विशाल खानकाहको निर्माण गराउने हजरत शेर ए नेपाल नै थिए।
- नेपालमा सबै भन्दा धेरै भारतिय ओलमाबाट उपनाम (लकब)हरु पाउने हजरत शेर ए नेपाल नै थिए।
- नेपालको सयौ ठाउँको मस्जिद र मदर्साको सरपरस्ती गर्ने व्यक्ति हजरत शेर ए नेपाल नै थिए।

## नबि ए करिम सल्लल्लाहु अलैही वसल्लम संगको प्रेम

अल्लाह तआला र उस्को रसुल सल्लल्लाहु अलैही वसल्लमको प्रेम इमानको भाग हो। एउटा साचो र कामिल मुमिन अल्लाह तआला र उस्को रसुल को आज्ञाको पालना, वहाँ ले दिनु भएका सबै आदेश मानेर वहाँ माथि समयको माग अनुसार आफ्नो प्राण पनि त्याग्ने व्यक्तिलाई असल मुमिन भनिन्छ। जो व्यक्तीले आफूलाई आशिके रसुल मान्दछ त्यसको लागि नबि सल्लल्लाहु अलैही वसल्लम को आदेश, बिना कुनै संकोच मान्नु पनि अनिवार्य हुन्छ।

उस्को लागि यो पनि जरुरी हुन्छ कि हुजुर सल्लल्लाहु अलैही वसल्लमको नाम प्रेमका साथ लिओस, उहाँको जिक्र हुदा दुरुद शरिफमा मगन होस् , तपाईको हरेक अदा माथि मर्न मिट्न तैयार होस् तब गएर आशिके रसुल भन्ने

हक राख्दछ। सहाबा ए किरामको प्रेमको हालत यो थियो कि जब अल्लाहको नबिको दरबारमा उपस्तिथ हुन्थे तब खामोशी र आफ्नो अनुहारलाई भुमी तर्फ झुकाएर अदब का साथ बस्दथे। जब अल्लाहको नबि वजु गर्नुहुन्थ्यो तब उन्को शरीरबाट टप्केको पानीको थोपालाई जमिनमा झर्न दिदैन थिए। हुजुर सल्लल्लाहु अलैही वसल्लमको लुआबे पाक (थुक)लाई आफ्नो आँखा, अनुहारमा मल्दथे, यो थियो सहाबा ए किराम को प्रेम, त्यसैले त सदैवको लागि ताराहरु जसरी चम्किए। यहि अल्लाह को नबि सल्लल्लाहु अलैही वसल्लमको प्रेम र माया थियो जस्ले गर्दा सानो गाउँको व्यक्ति समयकै सबै भन्दा ठुला बिद्धान मध्य बन्न पुगे।

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह को हरेक बानी, हरेक बोलीबाट अल्लाहको नबिको प्रेमको सुगन्ध आउने गर्दथ्यो। यस्तो भन्न गलत नहोला कि उहाँको जीवन पनि अल्लाह र उस्को रसुलको लागि रह्यो र आज इन्तेकाल पछि पनि हजारौ विद्यार्थी, हजारौ प्रेमी, हजारौ मुरिदहरुको मनमा त्यो प्रेमको दिप अहिले पनि बाल्दै हुनुहुन्छ।

हजरत शेर ए नेपालको हुजुर सल्लल्लाहु अलैही वसल्लम संगको प्रेम को हालत यो थियो कि पूरा जीवन वहाँ कै प्रेम र मायाको लागि व्यतित गर्नु भयो। नबि ए पाकको प्रेममा डुबेर तपाई सल्लल्लाहु अलैही वसल्लमको महानता तकरिर र किताबबाट सदैव गरिराख्नु भयो। हुजुर सल्लल्लाहु अलैही वसल्लमको महानतामा सानो तौहिन पनि बर्दाशत गर्नुभएन। उहाँले एउटा फतवा मा भन्नुभएको थियोः नुर नै नुरले भरिएका हाम्रा प्यारा नबि , कयामतका दिन हाम्रो लाज राख्ने, सम्पुर्ण नबिहरुको अन्त्यमा आउने, अल्लाह तआला को सबै भन्दा प्यारा बन्दा र रसुल हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमको महानतामा हल्का तौहिन या लांछना कुफ्र हो। हुजुर सल्लल्लाहु अलैही वसल्लमको कुनै कुरा, कार्यलाई गलत नजरले हेर्ने ब्यक्ति काफिर र मुर्तद हो, हुजुरको महानता मा के, कसरी, को कुनै सवाल नै छैन। हुजुरको इज्जत र

सम्मान गरिराख्नु नमाज रोजा भन्दा पनि अघि, सम्पुर्ण उम्मत माथी पहिलो अनिवार्यता हो । (फतवा बरकात)

यदि कुनै महि्फलमा नबि ए करिम सल्लल्लाहु अलैही वसल्लमको जिक्र हुन्थ्यो भने हजरत शेर ए नेपालको मन मस्तिष्क प्रेम र मायाले आखा भावुक हुदै ओठमा दुरुदे पाक जारी हुन्थ्यो । जब मदिना बारे कुरा चल्दथ्यो आफ्नो आँखा अघि मदिनाको प्यारो दृष्य ल्याउदथे मानौकि अहिले कुनै अरु ठाउँमा नभइ त्यहि सुन्दर र रमणीय मदिनाको बाटोमा हिडि रहेका छन् । त्यहाको कबरिस्तान (जन्नतुल बकिअ), त्यो दरबारको जाली, त्यो हरियो गुम्बद, त्यो नबि ए पाकको मस्जिद र त्यहाको भित्ता र ढोकाहरु मानौ कि नआत पढ्ने या सुन्ने क्रममा पूरा हजरत शेर ए नेपालको आँखा अगाडि दौडिएको झै लाग्दथ्यो । उहाँलाई देखेर पनि उहाँ भित्र रहेको इश्के रसुलको दिप हरेक मुस्लिमले थाहा पाउन सक्दथे । तकरिर र बयानमा अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमका महानता बारे कुरआन र हदिषबाट यसरी बताउदथे कि पूरा महि्फलमा भएका आशिके रसुल झुम्न थाल्दथे । फत्वामा जब हबिबे करिम सल्लल्लाहु अलैहि वसल्लम बारे लेख्थे कुरआन र हदिषबाट ज्ञानको मोति झै प्रष्ट बनाएर लेख्दथे ।

जब कुनै व्यक्तिलाई प्रिय नबि संग प्रेम हुन्छ, सदैव वहाँ कै बारेमा सोच्न थाल्छन् र वहाँ कै जिक्रबाट मनलाई शान्ती प्राप्त हुने गर्दछ । हुजुर सल्लल्लाहु अलैही वसल्लमको एक एक बानिलाई अमुल्य सोचेर हरेक काममाथी चल्ने कोसिस गर्दछ । वजुका साथ सुत्नु, मिस्वाकको प्रयोग गर्नु, सदैव वजुका साथ रह्नु, खुश्बु लगाउनु, मेहमानहरुको खातिरदारी गर्नु, टुहुरालाई माया गर्नु, गरिब फकिरलाई माया दिनु, ठुलाको आदर , सानालाई प्रेम गर्नु, कमजोरहरुलाई साथ दिनु, अह्ले बैयत को सम्मान गर्नु, प्यारा नबिका गद्दारहरु संग नफ्रत गर्नु, रबिउल औव्वल शरिफ, शबे मेअराजमा नबि ए पाकको महानता बारे जिक्र गर्न महि्फल गराउनु, माटोको भाडामा खाना खानु, माटोको गिलासमा

पनि पिउनु, बालकहरुलाई प्रेम गर्नु र अल्लाहको नबि ए पाकका प्यारा गुलामहरुलाई माया गर्नु यो सबै ती खुबीहरु हुन् जस्ले गर्दा हजरत शेर ए नेपाल सुर्य भन्दा पनि बढी चम्किन थाले ।

हजरत शेर ए नेपालको नबि ए पाक संग को प्रेमको हालत यो थियो कि जो व्यक्ती ले हुजुर सल्लल्लाहु अलैही वसल्लम संग आफ्नो गुलामीको नाता पेश गर्दथ्यो उसलाई आफ्नो सरको ताज बनाउथे र जुन व्यक्ती संग हुजुर सल्लल्लाहु अलैही वसल्लमले बच्ने आदेश दिनुभयो त्यो संग आफू नि बच्दथे र आफ्नो मान्ने व्यक्तिहरुलाई पनि बचाउथे ।

## प्यारा नबिको कपाल मुबारकको इज्जत

हजरत शेर ए नेपाल जुन समयमा जामिआ हनफिया गौषियामा शैक्षिक भुमिका निर्वाह गर्दै हुनुहुन्थ्यो त्यही दोश्रो तल्लामा एउटा कोठामा हुजुर सल्लल्लाहु अलैही वसल्लमको कपाल शरिफ पनि राखिएको थियो । हरेक बर्ष रबिउल अव्वल शरिफको प्यारो महिनामा त्यो नुरानी कपाल शरिफको दर्शन पनि गराइने गरिन्थ्यो । त्यो कोठा संग उहाँ निकै प्रेम गर्ने गर्दथे । यहाँ सम्म कि विद्यार्थीहरुलाई त्यो तर्फ उल्टो नबस्न र ठूलो स्वरले नपढ्न पनि आदेश दिएका थिए । त्यो कोठाको माथीबाट हिड्न रोक्न र मुए मुबारकको बेअदबी नहोस् भनेर रोक्न छतमा चारै तर्फबाट इट्टा लगाइएको थियो । छतको त्यो भागबाट कसैलाई हिड्ने अनुमती थिएन । हजरत शेर ए नेपाल जब आफ्ना गाउँ लोह्ना शरिफ गए तब मुए मुबारकलाई पनि खानकाहे बरकातमा लिएर गए । अब हरेक बर्ष हुने जल्सा ए बरकातुन्नबी को बिहानीको बेला त्यस्को जियारत गराइने गरिन्छ ।

हजरत शेर ए नेपाल नबि ए पाक सल्लल्लाहु अलैही वसल्लम संग जोडिएका हरेक कुराको अरु भन्दा धेरै माया र सम्मान गर्ने गर्दथे ।

निःशन्देह एउटा साचो आशिके रसुलको प्रेमको संकेत नै यहि हुने गर्दछ कि

तपाई सल्लल्लाहु अलैही वसल्लम संग साचो प्रेमको इज्हार गरोस् र तपाई संग जोडिएका हरेक कुराको पनि प्रेम र सम्मान गरि राखोस् । किनकि निस्बत बाटै हरेक कुरा महान हुने गर्दछ र यहि हाम्रो बुजुर्गहरुले दिएको सबक हो !

अदबका साथ नसिब वाला भइन्छ

अदब बिना बद नसिब !

## मदिना शरिफको खुजुर को अदब

हजरत शेर ए नेपाल हुजुर सल्लल्लाहु अलैही वसल्लम संग कति प्रेम गर्दछन् भन्ने कुरा कुनै व्यक्तिबाट पनि लुकेको छैन । हुजुर सल्लल्लाहु अलैही वसल्लमको हरेक बानी संग उहाँ रह्मतुल्लाह अलैह निकै प्रेम गर्ने गर्दथिए र हरेक सुन्नत माथि चल्न पूरा जीवनभरी कोसिस गरिराखे । हुजुर सल्लल्लाहु अलैही वसल्लम संग जोडिएका हरेक कुरा हरेक व्यक्तिसंग तपाई प्रेम गर्ने गर्दथे ।

जब पहिलो पल्ट हरमैन शरिफैनको जियारतको लागि मक्का मदिना पुगेर फर्कनु भयो तब ठुला ठुला बिद्वान आलिम देखि लिएर हरेक व्यक्ति तपाई संग भेट गर्न र तपाईलाई मुबारकबादी दिन आइ पुगेका थिए । सोही क्रममा हजरत मुफ्ती मह्मुद आलम नुरि र मौलाना अब्दुल हादी साहब पनि आउनु भयो । सुन्नत अनुसार हजरत शेर ए नेपालले वहाँहरुलाई केही नास्ताका लागि दिए पछि मदिना शरिफबाट ल्याएका खुजुर पनि अगाडि राख्दिनु भयो । खजुर खाइ सके पछि मुफ्ती मह्मुद साहबले त्यस्को गुठ्ली जामिआ को आगनमा फ्याक्नु भयो । त्यो देख्ना साथ हजरत शेर ए नेपाल त्यहाबाट उठे अनि त्यो गुठ्ली टिपेर आफू संग राख्दै भन्नु भयो “मुफ्ती साहब ! तपाइले मदिना शरिफ, मेरो आकाको दरबारको खजुरको गुठ्ली यसरी फ्याक्दिनु भयो । म त्यहाको खुजुर खाएर त्यस्को गुठ्लीलाई सुपारी जसरी चुस्ने गर्दछु र चबाएर निल्छु” ।

यो कुरा सुनेर मुफ्ती साहबले भन्नुहुन्छ कि वँहा निकै दुःखी हुनुभयो र मन

मनै यो पनि सोच्नु भयो कि हजरत शेर ए नेपाल जब मदिना शरिफको खजुरको गुठ्लीको यदि आदर गर्दछन् भने वहाँले हुजुर सल्लल्लाहु अलैही वसल्लमलाई कति माया गर्दछन होला ।

यो थियो हजरत शेर ए नेपालको अल्लाह को नबि प्रतिको प्रेम वहाँ सल्लल्लाहु अलैही वसल्लम संग जोडिएको हरेक कुरालाई अरु भन्दा धेरै प्रेम गर्ने ।

## शेर ए नेपाल र सुन्नत

हजरत शेर ए नेपाल प्रिय नबि सल्लल्लाहु अलैही वसल्लम सङ्ग निकै गहिरो प्रेम राख्ने आशिक थिए । उहाँ रह्मतुल्लाह अलैहको जीवनको हरेक पाना सुन्नतको नुरले चम्किएको र भरिपुर्ण भएको देखिन्छ । उहाँको हरेक कार्य अल्लाह तआलालाई खुशी बनाउनका लागि र अल्लाहको नबिको आदेश माथी चल्नको लागि हुने गर्दथ्यो । उहाँ हरेक समय सुन्नत र शरीअत बिरुद्ध कार्य नगर्ने निकै कोसिस गर्दथे ।

## उँटको सवारी

उँटको सवारी गर्नु हाम्रो नबि अलैहिस सलामको सुन्नत हो । यो सुन्नत माथी अमल गर्ने इच्छा हजरत शेर ए नेपाल माथी एउटा लामो समय देखि थियो । निःशन्देह जस्को नियत अल्लाह र उस्को रसुलको खुशीको लागि मात्र होस् र त्यो नियत साचो छ भने अल्लाह पाक आफ्नो बन्दा को हरेक इच्छालाइ पूरा गर्दिनु हुन्छ र त्यो पूरा गर्ने अस्बाब पनि मिलाइदिनु हुन्छ । यहि नै भयो, जुन इच्छा हजरत शेर ए नेपालले एउटा लामो समय देखि राखेको थियो त्यो पूरा हुन पुग्यो र यसरी पूरा भयो कि त्यत्रो धुम र प्रतिष्ठा अरु कुनै ले सजिलै प्राप्त गर्न सक्दैनन् ।

वि.सं २०६६ सालको कुरा हो नारायणघाट स्थित अलजामिअतुल बरकातिया बरकाती जामे मस्जिदको आयोजनामा एक रातको जल्साको प्रोग्राम हजरत शेर ए नेपाल कै सरपरस्ती र सदारतमा राखिएको थियो । सोही प्रोग्राममा

उपस्थितिको लागि उहाँ पुग्नुभयो । बिहान मस्जिद प्राङ्गढबाट एउटा विशाल जुलुश निकालिएको थियो जस्मा हजरत शेर ए नेपाललाई उँट मा बसाएर पूरा बजार परिक्रमा गराइएको थियो । निश्चित रुपमा निकै भाग्यशाली छन् नारायणघाटका मुस्लिमहरु जस्ले समयका सबैभन्दा ठुला बिद्वानको एउटा ठूलो कामना त्यो पनि अल्लाह र उस्को रसुल को खुशीका निम्ति पूरा गराइदिए । अल्लाह सबैलाई त्यस्को राम्रो जजा दिउन ।

## माटोको भाडाको प्रयोग

हजरत शेर ए नेपालले धेरैजसो माटोको भाडा कै प्रयोग गर्ने गर्दथे । खानाको लागि प्लेट, पानी चिया पिउनको लागि गिलास पनि माटोको नै थियो । सफरमा पनि धेरै जसो माटो कै भाडाको प्रयोग गर्दथे । हुजुर सल्लल्लाहु अलैही वसल्लमले त्यस्को प्रयोग गर्नु हुन्थ्यो र मन पनि पराउनु हुन्थ्यो । हजरत खबाब रदि अल्लाहु अन्हु द्वारा उल्लेखित छ कि मैले अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमलाई माटोको भाडामा पानी पिएको देखेको छु (मअरफतुस सहाबा भाग २ पृष्ठ १७४) आलाहजरत रह्मतुल्लाह अलैहले भन्नु भएको छ कि हुजुर सल्लल्लाहु अलैही वसल्लमबाट तामा, पितल को भाडाबाट खानु पिउनु साबित छैन, माटो या काठको भाडा थियो र पानीको लागि भाडा पनि त्यसैको थियो । (फतवा रज्विया भाग २२ पृष्ठ १२९)

## अमामा र टोपी

अमामा शरिफ र टोपी दुवै सुन्नत हो । हजरत शेर ए नेपाल दुवै सुन्नतको निकै पाबन्द थिए । विभिन्न रङ्गका प्यारा अमामा आफ्नो सरमा सजाउने गर्दथे । जस्ले गर्दा उहाँ रह्म्तुल्लाही अलैहको अनुहारमा अझ खुबसुरती आउने गर्दथ्यो । उहाँ अमामा लगाएर बस्नु हुदा यस्तो लाग्थ्यो कि अनुहारबाट नुरको बारिस हुँदैछ । तपाईको प्यारो अनुहार हाम्रो नबिको सुन्दरताको सानो झलक लाग्थ्यो । दर्सगाहमा हदिषको दर्श दिन बस्नु हुँदा पहिला वजु गरेर सिरमा

अल्लाहको नबिको सुन्नत अनुसार अमामा बाध्थे  र खुश्बु लगाएर बल्ल बस्दथे ।

जब अमामा लगाएर स्टेजमा बस्नु हुन्थ्यो सबैको नजर उहाँ तर्फ हुन्थ्यो र सबै तपाईकै दिदारबाट मस्त हुने गर्दथे । नमाजको लागि  मस्जिद तर्फ जाने क्रममा पनि धेरै जसो अमामा शरिफ नै लगाउने गर्दथे । टोपी सादा लगाउने गर्द थिए । सेतो रङ्ग को टोपी निकै मन पराउनु हुन्थ्यो ।

## सधै वजुका साथ रह्नु

आला हजरत अलैहिर्रह्माले भन्नु भएको छ : "कि केही आरिफिनहरुले भनेका छन् कि जो व्यक्ति सदैव वजुका साथ रहन्छ भने अल्लाह तआलाले उस्लाई सात फजिलतहरु प्रदान गर्ने गर्दछ : (१) फरिस्ताहरु त्यो संग बस्न सदैब तत्पर रहनेछन्  (२) नेकि लेख्ने फरिस्ता उस्को नेकि लेखी रहनेछ (३) उस्को शरीरको अङ्गले तस्बिह पढ्नेछ (४) त्योबाट जमाअत नमाजमा पहिलो तकबिर छुट्ने छैन (६) मौतको बेला हुने पीडा सजिलो हुनेछ (७) जब सम्म वजुका साथ रह्ने छ अल्लाहको अमानमा हुनेछ" (फतवा रज्विया भाग १ पृष्ठ ७०२) ।

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह सदैव वजुकै हालतमा रह्ने गर्दथे र त्यस्को निकै अडिगताका साथ पालना गर्ने गर्थे । जब वजु टुट्दथ्यो बिना कुनै अबेर र संकोच सुन्नत अनुसार वजु गर्थे । नाश्ता या खाना खानु अघि पनि वजु गर्दथे र सुत्नु भन्दा अगाडी पनि वजु गर्ने गर्थे।

## मिस्वाक गर्नु

मिस्वाक गर्नु अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमको प्यारो सुन्नत हो । यो यस्तो सुन्नत हो कि यस्को बारेमा विभिन्न हदिषहरु आएका छन् । हजरत सद्रुश्शरिअह बहारे शरीअत मा लेख्नु हुन्छ कि जो व्यक्तिमा मिस्वाक गर्ने आदत हुने गर्दछ त्यो ब्यक्तिलाई मर्ने समयमा कलमा नसिब हुनेछ (बहारे

शरिअत भाग १ पृष्ठ २८८) ।

नबि ए करिम सल्लल्लाहु अलैही वसल्लमको यो प्यारो सुन्नतबाट हजरत शेर ए नेपाललाई यति धेरै प्रेम थियो कि जति पल्ट वहाँ ले वजु गर्दथे त्यति पल्ट नै मिस्वाक गर्ने गर्थे । सुत्नु अघि र सुतेर उठे पछि पनि मिस्वाक गर्थे र जीवनकाल भरी यस सुन्नत माथी चली राख्नुभयो ।

नोटः सम्पुर्ण हजरत शेर ए नेपाल संग प्रेम गर्ने खलिफा, मुरिद र चाह्ने महानुभावहरु संग अनुरोध छ कि अरु सुन्नतहरुका साथ साथै हुजुर सल्लल्लाहु अलैही वसल्लम को यी दुई प्यारा सुन्नत (वजु र मिस्वाक) माथि पनि अमल गरेर हजारौ नेकि र फाईदा हासिल गर्नुस । हदिषे पाक मा आएको छ कि नबि ए पाक सल्लल्लाहु अलैही वसल्लम ले हजरत अनस रदि अल्लाहु अन्हु संग भन्नुभयो कि तिमी सदैव वजुका साथ रह्न सक्छौ भने त्यस्तै गर किनकि जुन व्यक्तिको रुह वजुको हालतमा निकालिन्छ त्यो ब्यक्तिको लागि शहादत लेखिन्छ। (शुएबुल इमान भाग ३ हदिष नं २७८३) ।

## शेर ए नेपालद्वारा लिखित किताबहरु

हजरत शेर ए नेपाल को तब्लिगि र दिनी कार्यहरुको सुचि एकदमै लामो रहेको छ। उहाँको विभिन्न दिनी समाजी योगदानले पूरा नेपाललाई घेरेको छ तर तिनीहरु मध्य सबै भन्दा मुख्य शिक्षा, ज्ञान, फतवा लेखाइ , किताबहरु र तकरिर रहेको देखिन्छ । उहाँको दारुल इफ्तामा देश बिदेशबाट इस्तिफ्ता (प्रश्न) आउने गर्दथ्यो र उहाँले ती प्रश्नहरु को निकै खुबिका साथ उत्तर दिने गर्नु हुन्थ्यो । यदि कुनै प्रश्नको उत्तर धेरै लामो, तह्किकका साथ साथै निकै सोचबिचार र कुरआन तथा हदिषको छानबिन पछि निक्लिएको उत्तरलाई एउटा किताब (रिसाला) को रुप दिएर आफै त्यस्को नाम लेख्दिनु हुन्थ्यो ।

नेपालमा तब्लिग खास गरि ३ कुरा माथी निर्धारित रहेको छ : (क) बयान, तकरिर र तब्लिगी भ्रमण (ख) किताब र लेख (ग) बैअत र इर्शाद ।

उहाँले समयको माग अनुसार सदैव आफूलाइ तिनै कुराको लागि तयार राख्नु भयो र उहाँको इन्तेकाल पनि त्यहि हालतमा भयो। दावत र तब्लिगि भ्रमणका साथ साथै आफ्नो अमुल्य समयमा दारुल इफ्तामा आएका प्रश्नको जवाब पनि प्रदान गर्नुहुन्थ्यो।

**फतवा दिनुका साथै जुन किताबहरु उहाँबाट लेखियो त्यसका नामहरु यस प्रकार रहेका छन् :**

१) फतावा बरकात एक देखि नौ भाग सम्म।

२) शाने मुस्तफा।

३) अह्सनुल कलाम फि रद्दिल किरात खल्फिल इमाम।

४) बीस रकआत तराविह दलाइल कि रोशनि मे।

५) कआबा या मजारे आदम अलैहिस सलाम।

६) तलाकके दो अहम बाब।

७) अजान, खुत्बा और इकामतके मसाइल।

८) बदमजहबो के पिछे नमाजका हुक्म

९) हिदायतका रास्ता।

१०) दाडीकि शरइ हद्दो हैषियत।

११) तबाही इन गुनाहो कि।

१२) इस्लाहे अकाइद।

१३) मानेअ हमल दवाओका शरइ हुक्म।

१४) अल कुद्स फित तारिख।

१५) अल हिजारतुल इस्लामियूया।

१६) अस्सलामु फिल इस्लाम ।

१७) हिफ्जुद दिन फि इताअतिन नबवियूया ।

१८) तज्किरतुल जैश ।

१९) तोहफए बरकात ।

२०) तौहिने रिसालत संगिन जुर्म ।

२१) अहसनुल अहादिष ।

२२) शाने गौषुल वरा ।

२३) बरकातुल अहादिष ।

नोटः खलिफए हुजुर शेर ए नेपाल मुफ्ती अब्दुससलाम अम्जदिको भनाइ रहेको छ त्यो मध्ये केही यस्ता किताबहरु पनि छन् जस्को नाम अहिले रजिस्टरमा मात्र थियो तर पछि मुफ्ती अब्दुस सलामको मिहिनतबाट त्यो पनि पूरा भयो ।

## बगदाद शरिफमा शेर ए नेपाल

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई हरेक बुजुर्ग्र औलिया संग प्रेम थियो । हरेक संग निकै आस्था र माया राख्ने गर्दथे । हरेकको प्रतिष्ठा र मकाम मन र मस्तिष्कबाट स्विकार्ने गर्दथे, हरेकको इस्लामी सन्देश जिवनकाल भरी फैलाउनका निम्ति लागि परिरहे । तर खास तौरमा सबैभन्दा धेरै लगाव र गहिरो मनबाट प्रेम चाहिँ हरेक मनका शैख, सम्पुर्ण औलियाका सरदार, बगदादका शहंशाह हुजुर सैयदेना गौषुल आजम शैख अब्दुल कादिर जिलानी रह्मतुल्लाह अलैह संग राख्ने गर्दथे । धेरै जसो उहाँकै चर्चा गर्नका साथै हरेक बर्ष ग्यारह्वी शरिफको बेलामा जामीआमा मिलादको मेह्फिल निकै शानका साथ मनाउने गर्दथे ।

पहिलो पल्ट रबिउष्षानी १४३९ हिजरी अर्थात सन् २०१८ जनवरिमा बगदाद शरिफमा उपस्थित हुनु भएको थियो । फेरि अर्को बर्ष अर्थात रबिउष्षानि १४४० हिजरी अर्थात २०१८ डिसेम्बरमा दोश्रो पल्ट सरकारे गौषे आजमको बार्गाहमा उपस्थित भएका थिए । त्यस पछि पनि सन् २०१९ मा उमराह को लागि हरमैन शरिफमा बगदाद शरिफ जाने कामना भएको हुदा सोही उमराह पछि को रबिउष्षानीको महिनामा बगदाद शरिफ जाने पुर्ण इरादा राखेका थिए तर किस्मतलाई अरु नै केही मंजुर रहेछ ।

## गौषे आजमको दरबार र शेर ए नेपाल

जब दोश्रो पल्ट हजरत शेर ए नेपाल अलैहिररह्मा सरकार गौषे आजमको दरबारमा उपस्तिथ हुनु भएको थियो तब उहाँ रह्मतुल्लाह अलैहको उपस्तिथिको नजारा एकदमै रुहानी र भावुक थियो । यो यस्तो उपस्थिति थियो कि जस्ले गर्दा उहाँ रह्मतुल्लाह अलैह गौषे आजमको बार्गाहमा मक्बुल हुनु भयो र त्यहीबाट विलायत र रुहानियत बाहेक एउटा ठुलो निशानी पनि जाहिर हुन पुग्यो । गौषे आजम रदि अल्लाहु अन्हु को बारगाह संग जोडिएको मस्जिदमा हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह नमाज पढ्दै थिए । त्यही नजिकमा बगदाद शरिफको एउटा रुहानी व्यक्तित्व र फकिह शैख जुनैद बिन अवाद बिन मरइ बिन हसन अल हुसैनि ले उहाँ रह्मतुल्लाह अलैहलाई हेरि राखे, त्यति बेला सम्म हेरिराखे जब सम्म वहाँले नमाज पढि राख्नुभयो । नमाजबाट फारिग हुनासाथ नै ती शैख हजरत नजिक आएर सलाम गरे अनि हजरतको हातलाई चुमे । त्यति बेला हजरत रह्मतुल्लाह अलैहका भतिजा मुफ्ती आरिफ साहब पनि हजरत संगै थिए । उन्ले शैखलाई भने कि तपाइले नेपालको शैखको हात चुम्नु भएको छ, यस्को कारण के हो ? शैखले जवाफ दिए किः जब हजरत नमाज पढ्दै थिए, मैले वहाँको निधारबाट नुर निक्लेको देखिरहेको थिए त्यसैले मैले आएर यिन्को हात चुमे । फेरि केही समय दुई बुजुर्ग बिच कुराकानी भयो र रुख्सतीको समयमा हजरत शेर ए नेपालले वहाँ

शैखलाई आफ्नो इजाजत र खिलाफत पनि प्रदान गर्नु भयो ।

## खानकाह र त्यस्को उद्देश्य

खानकाहको असल उद्देश्य भनेको नै त्यहाँबाट अंबिया र औलिया को सिरत र आदर्श खास गरि अन्तिम समयका नबि हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लम को मदनी र मक्की जीवन माथी चल्न प्रोत्साहन गर्नु का साथ साथै सहाबा, ताबइन, बुजुर्गाने दिनहरु को आदर्श बानीब्यहोराको ज्ञानबाट भरीपुर्ण गराउनु हो । कुरआन र हदिष माथी चल्न दावत दिनु, सधै सबर र अडिगताका साथ आफ्नो खुशी र शुक्रको पाठ पढाउनु, तौबा र त्यसमा निस्वार्थका साथ गुनाहबाट बच्नु, इबादत र जिक्रको पालना बारे सधै प्रोत्साहन गराउनु, मुटुमा लागेका काला दागहरु सफा गराउनु, घृणालाई हटाउनु, प्रेम र मायाबाट आफ्नो मन र मस्तिष्कलाई सुन्दर बनाउनु, दाजुभाइ जस्तो प्यारो सम्बन्धको भावना राखेर पूरा वातावरणलाई रमणिय बनाउनु, जवानहरुलाई शराब र कबाब खेल र झगडाबाट हटाएर जिक्र र फिक्रको मह्फिलमा ल्याउनु, उनीहरुको हाथबाट गितार र सितार, ड्रम र बिट को ठाँउमा तस्बिह राख्ने ज्ञान दिनु, रहमत र दया, प्रेम र माया, असल र भरिपुर्ण भावनाको शिक्षा दिनु, मानवलाई अल्लाहको महानता र उस्को पृय रसुल संग गरिने प्रेम बारे आदाब सिकाउनु, अल्लाहको र उस्को बन्दाको हुकुकलाई पुर्ण तरिकाबाट पूरा गर्नु र दीन र सुन्नीयतको सधै रक्षा गराउनु यो सबै खानकाहको असल उद्देश्य हुने गर्दछ ।

अल्हम्दोलिल्लाह ! खानकाहे बरकातको खुबिहरु मध्ये सबैभन्दा पहिलो खुबी यो रहेको छ कि पूरा नेपालमा यो प्रकारको यो पहिलो खानकाह हो जसबाट हिजो पनि देश भरीका मुस्लिमहरुको खिदमत गरिएको थियो र इन्शा अल्लाह आउने समय मा पनि गरिराखेर शैक्षिक केन्द्र बरेली शरिफको र रुहानी केन्द्र मारह्रा शरिफको एउटा संगम हुनेछ । यहाँबाट इल्म र रुहानियतको फैजको नदि बग्नेछ साथ साथै यहिबाट तौहिद र रिसालतको एउटा यस्तो काफिला निस्किनेछ जस्ले अह्ले सुन्नत को आस्था र बुजुर्गाने दिनको

विशाल व्यक्तित्वहरु माथी हुने हम्लाबाट सधै बचाई राख्नेछ।

सुगन्ध फैलिनेछ हरेक गलि शहरमा हेर

केही फुल अहिले उमरिदैछ हाम्रो घरमा !

## खानकाहे बरकातको उद्देश्य

लोहना शरिफ खानकाह को निर्माण हुजुर शेर ए नेपाल द्वरा भएको थियो। यस खानकाहे बरकात को उद्देश्य त धेरै छन् तर केही मुल्यवान उद्देश्यहरु यहाँ लेखिदैछ :

- मज्हबे इस्लाम र मस्लके आला हजरतलाई फैलाउने।
- इस्लामी सोच र आस्थाबाट अवाम ए अह्ले सुन्नतलाई अवगत गराउनु।
- नबि ए करिम सल्लल्लाहु अलैही वसल्लमको सिरत र सहाबा र अस्लाफको अवस्था र घटनाबारे सिकाउनु।
- प्यारा नबि सल्लल्लाहु अलैही वसल्लमको प्रेम र मायाबाट मन र सोचलाई भरिपुर्ण गराउनु।
- ओलमा र अवाम बिच उत्पन्न भएको दुरिलाई हटाउनु।
- असल समाज र असल ब्यक्तित्वको निर्माण गराउनु।
- मज्मउल् बरकात एकेडमिको अनुसरणमा समय समयमा इस्लामी किताब र पम्फ्लेट प्रकाशन गर्नु।
- मुस्लिम बालबालिकाहरुलाई इस्लामी शिक्षाबाट भरिपुर्ण गर्न प्रोत्साहन गर्नु।
- हसद र किना, नफरत र दुश्मनीबाट मन मस्तिष्कलाई टाढा राख्नु।

## मुरिदहरु का लागि जरुरी आदेश

- मज्हबे अहले सुन्नत वल जमाअत को मज्हब माथी अडिगताका साथ कायम रहनु, सुन्नीहरुको जति पनि बिरोधी फिर्काहरु छन् तिनिहरु संग मिलजुल, उठ्नु बस्नु, उनिहरुको जल्सामा जानु, उनिहरु संग रिश्ता नाता लगाउनु सबै शरिअतको हिसाबले हराम हो। यो सबै फिर्काहरुबाट टाढा रह्नु र उनिहरुलाई आफूबाट पनि टाढा गर्नु।
- पाचँ समयको नमाज को पाबंदी निकै महत्वपुर्ण रहेको छ। पुरुषहरुको लागि मस्जिदमा जमाअत पनि अनिवार्य गरिएको छ। कजा नमाजहरु जति चाडै सकिन्छ पूरा गर्नु, हिसाब लगाएर बिस्तारै तर चाडै अदा गर्नु , सुस्ती नगर्नु हरेक दिन र रातको गरेर २० रकआत कजा अदा गर्नु।
- रमजान शरिफको रोजा राख्नु र कजा रोजा आउने रमजान भन्दा अगाडि पूरा गर्नु (यस्को बारेमा अझ जान्न संकलकः साजिद अहमद द्वारा अनुवादित किताबको रमजानको उपहार अध्ययन गर्नु होला)।
- जो साहिबे माल छन् तिनिहरु माथी जकात पनि फर्ज हुन्छ। उनिहरु हिसाब निकालेर हरेक हजार मा पच्चीस रुपैयाको हिसाबले जकात निकालुन।
- अल्लाह तआलाले जुन मुसलमानलाई धन र सम्पत्ती प्रदान गरेको छ उनिहरु माथी जीवनमा एक पल्ट हज गर्नु अनिवार्य हुन्छ।
- झुठो कुरा बोल्नु, चुग्ली र पछाडी कुरा काट्नु, खयानत गर्नु, चोरी, जिना, देखावा, घमण्ड आदि जस्ता हरेक नराम्रा कार्यबाट बच्नु र अल्लाह र उस्को बन्दा प्रतिको दायित्वमा लागि परि राख्नु।
- आफ्नो भित्री र बाहिरी सुधारको कार्यमा अडिगताका साथ दान दिनु। जस्ले यो कुरा माथि अमल गर्नेछ, अल्लाह र उस्को रसुल सल्लल्लाहु अलैही वसल्लमको वचन अनुसार उस्को लागि जन्नत रहेको छ।

- दिनी शिक्षा, आफ्नो दैनिक मसाइलमा आउने समस्यालाई आफै हल गर्नको निम्ति र आफ्नो सन्तानलाई सिकाउन निम्ति हासिल गरोस् ।
- सधै वजुका साथ रह्ने बानी बसालौ किनकी हदिषमा यस्को निकै फजिलत बयान गरिएको छ ।
- आलिमे दिन र सैयदहरु को आदर गरि राख्ने, तर ति ओलमा जस्मा कुनै अमल छैन त्यस्ता को हैन ।

अल्लाह पाक सबैलाई माथिको कुराहरुमा अमल गर्ने तौफिक प्रदान गरून् ।

## शेर ए नेपालका सन्तानहरु

अल्लाह तआलाले हजरत शेर ए नेपाललाई ५ छोरा र २ छोरी प्रदान गर्नु भयो ।

छोराहरु

१) जानशिने शेर ए नेपाल अल्लामा जियाउल मुस्तफा, सज्जदःनशिन खानकाहे बरकात लोह्ना शरिफ ।

जन्मः वि.सं. २०२४ असोज २६ र १२ अक्टोबर सन् १९६७ इस्वि र ८ रजब १३८७ हिजरी ।

२) इन्जिनियर जनाब जकाउल मुस्तफा ।

जन्म : १३९४ हिजरी र सन् १९७५ र वि.सं २०२६ ।

३) हाफिज व कारी रजाउल मुस्तफा बरकाती ।

जन्म : २० रजब १३९६ हिजरी र १८ जलाई सन् १९७६ र वि.सं २०३३ साउन ३ ।

४) जनाब षनाउल मुस्तफा ।

जन्म : १३९८ हिजरीर सन् १९७८र वि.सं २०३५ ।

५) हजरत अल्लामा हाफिज व कारी फिदाउल मुस्तफा बरकाती मियाँ ।

जन्म : ४ मुहर्रम १४०४ हिजरी, अर्थात २१ अक्टोबर सन् १९८२र वि.सं.२०३९ कार्तिक ४ ।

छोरीहरु

६) (१) ठूलो छोरी मोह्तर्मा रशिदा खातुन

जन्म : १३८६ हिजरी र सन् १९६६र वि.सं. २०२३ ।

७) (२) कान्छी छोरी मोह्तर्मा साजिदा खातुन ।

जन्मः १३८९ हिजरीर सन् १९७० र वि.सं. २०२६ ।

## नमाज संग प्रेम

नमाज अल्लाह तआला को एउटा ठुलो इबादत र इस्लामको एउटा बुन्यादी स्तम्भ मध्ये एउटा स्तम्भ हो । कुरआन र हदिषलाई त्यसको निर्धारित समयमा पढ्ने निकै ताकिद आएको र नमाज अदा गरेपछि मिल्ने सवाबको बारेमा पनि बयान गरिएको छ । यस्लाई छोड्नुमा अजाब, गुनाह र निकै वइदहरु आउने पनि वर्णन गरिएको छ। निःशन्देह अल्लाह वाला तिनिहरु नै हुन् जस्ले नमाज संग साचो प्रेम र अडिगताका साथ त्यस्लाई कायम राख्दछन् । हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई नमाज संग निकै प्रेम थियो र त्यस्लाई सधै समयमा नै पढ्नु हुन्थ्यो । कुनै पनि हालतमा त्यस्लाई छोड्ने या कजा गरेर पढ्ने, कहिल्यै पनि यस्तो बानी भएन । सफर होस् या कोठामा सधै नमाज समयमा नै कायम गर्दथे ।

३१ डिसेम्बर सन् २०१७ कुरा हो कि उहाँ बडाखिर्यानीबाट लहान प्रोग्राममा जाँदै हुनुहुन्थ्यो । अहिले खिर्यानीबाट निक्लिन खोज्नु भएको थियो कि औरङ्गको एउटा व्यक्ति हम्जाको बुबाको इन्तेकाल भएको समाचार पाउनु भयो । वहाँ रह्मतुल्लाह अलैहले पहिला जनाजा पढ्ने अनि लहान जाने

आदेश दिनु भयो । औरङ्ग भन्ने ठाउँमा हजरत पुग्नु भएको समयमा निरन्तर सफरको कारणले थकावट हुनुको साथ साथै चिसोले पनि छोइ सकेको थियो। त्यहा पुग्नासाथ वजु गर्नु भई अजान र इकामतका साथ जमाअतमा जोहरको नमाज पढ्नुभयो र जनाजाको नमाज पछि लहानको लागि प्रस्थान गर्नु भयो। काफी थकान त पहिला नै थियो फेरि ज्वरोले पनि एकैसाथ समात्न पुग्यो र हजरतको हालत बिगृन थाल्यो । हाजि यासिन साहबलाई फोन गरेर पहिला हजरतलाई डाक्टर संग जचाउने कुरा हुदाँ हाजि यासिन साहबले घरमा नै डाक्टर बोलाउने प्रस्ताव राखे अनि हजरतको गाडिलाई सिधा हाजि साहब कै घरमा लगे । त्यहा पुगे पछि हाजि साहबले भन्नुभयो “हजरत डाक्टर बोलाउदैछु” यसैको उत्तरमा हजरतले उत्तर दिनु भयो कि “पहिला जानमाज लिएर आउ, नमाज पढे पछि रोग आफै निको हुनेछ” । यसपछि हजरतले नमाज पढ्नु भयो। अल्लाहको हजारौ करम कि नमाज पढ्ना साथ हजरतलाई निकै राम्रो भएको देख्दा सबै चकित हुन पुगे । पछि डाक्टर आएर चेक गरेर औषधि दिएर गयो ।

मैले (साजिद) धेरै पल्ट हजरत संग सफर पनि गरे । आफ्नो बाल्यकालमा देखे पनि, हजरत संग बसे पनि। तर कुनै पनि अवस्थामा नमाज छोडेको थाहा पाइन । जनकपुर मदर्सामा मुअज्जिनको हैसियतले केही महिना बस्ने क्रममा अजान अघि सर्वप्रथम हजरतलाई उठाउने काम हुँदा सधै हजरतको कोठा अगाडि गएर आवाज दिदाँ वहाँलाई सधै बिहान किताब पढीरहेको पाउदथे। कुनै समयमा निन्द्रामा हुदा पनि नमाजको समयमा कसैले उठाउदा कहिले पनि गाली दिनु भएन बल्की उपहार स्वरुप उठाउनेलाई केही तोह्फा या पैसा दिने कुरा पनि स्वयं आफ्नै आँखाले देखेको छु। निश्चितरुपमा अल्लाहको नमाजमा जस्तो लुत्फ र आनन्द अरु कुनै कुरामा हुदैन भन्ने बारेमा हजरत शेर ए नेपालको पूरा जीवन एउटा सबुतको रुपमा उपस्थित भएको थियो ।

## तिलावत संग प्रेम

अल्लाह तआलाको जिक्र र उस्को हबिब सल्लल्लाहु अलैही वसल्लमको दरबारमा दुरुद पठाउनु सबै भन्दा ठूलो खुशकिस्मतीको कुरा हो, जस्को भाग्यमा यो पढ्न लेखिएको हुन्छ उसको दुनिया पनि सप्रिन्छ र आखिरत पनि। उस्को दरजातमा बुलन्दि हुन थाल्दछ, उस्लाई अल्लाहको तर्फबाट मह्बुबियतको सनद पनि प्राप्त हुन्छ। हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई पनि अल्लाहको जिक्र र रसुलुल्लाह को जिक्र संग निकै लगाव थियो। कुरआनको जिक्र र शैखे तरिकत मुर्शिदे मिल्लत सैयदुल ओलमा रह्मतुल्लाह अलैहबाट प्राप्त गरिएको वजाइफलाई सदैव पालना गर्ने गर्थे। नबि ए मुकर्रम सल्लल्लाहु अलैही वसल्लम माथी दुरुद पठाउनु एउटा यस्तो बानी बसि सकेको थियो कि उठ्दा, बस्दा, सफरमा, सदैव आफ्नो बोलिबाट जारी राख्दथे। हरेक दिन फजर पछि कुरआनको तिलावत र हरेक नमाज पछि जिक्र, दुरुद र तस्बिह पढ्ने गर्दथिए।

जब पहिलो पल्ट हजको लागि प्रस्थान गर्नु भएको थियो सोही बेला मदिना शरिफ रियाजुल जन्नहमा एक बैठकमा पूरा कुरआन पढ्नु भएको थियो।

हजरत हाफिज गुलाम मुर्तजाले भन्नुहुन्छ कि वहाँ हजरत संग धेरै पल्ट नासिक पुगेका छन् जब पनि ट्रेनमा बस्दथे दुआ पढेर बस्दथे र पूरा सफर कुरआनको तिलावत गर्ने गर्दथे।

जब कहिले हजरत रह्मतुल्लाह अलैह दावतमा जान्थे तब गाडीमा बसे पछी कुरआन र जिक्रमा मश्गुल हुने गर्दथे।

## दावत र तबलिग

जसरी लेख र किताब, ज्ञान र शिक्षाबाट दिन र मजहबलाई फैलाइनेछ त्यसरी नै जल्सा जुलुसबाट पनि फैलिने गर्दछ। अवाम र खासलाई योबाट निकै फाइदा पुग्ने गर्दछ। नेपालमा इस्लामी सोच र आस्थाको तब्लिगको लागि

मुफ्ती ए नेपाल ले ज्ञान र आचारणका साथ साथै समय समयमा देशको विभिन्न ठाउँहरुमा ठुलो सानो प्रोग्रामहरु गराइ राख्नुभयो । यो कार्यको लागि अवामलाई पनि सदैव प्रोत्साहन गरि राखे जस्ले गर्दा अवाममा पनि दिन इस्लाम र सुन्नीयत को जज्बा भइ राखोस् र साथै समय समयमा ठुला ठुला ओलमा र मशाएखको जियारत र वहाँबाट नसिहत पनि प्राप्त गरि राखोस् । नेपालको भागहरुमा जल्साको सोच, आलाहजरत र मसलके आलाहजरतको सहि अर्थ मुफ्ती ए आजमे नेपाल अलैहिर रह्माले नै गराउनु भयो ।

## बद अकिदाको बिरोध

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह ले दीन र सुन्नीयतलाई बढाउने कार्य ज्ञान प्राप्तिको समयबाट नै शुरु गर्नु भएको थियो । तर निरन्तरताका साथ र पूरा जोश र हिम्मतका साथ नजर गर्दै यो मिशनको शुरुआत फरागत पछि शुरु गर्नु भयो । हेर्दा हेर्दै देश, बिदेश र वरिपरी को वातावरण उहाँको कार्य, उहाँको ज्ञान र अडिगताको चर्चा फैलिन थाल्यो । अवाम या खास, सोच र बिचार गर्ने व्यक्तित्व मस्जिद मदरसा चलाउने सम्पुर्णको ध्यान उहाँ रह्मतुल्लाह अलैह तर्फ केन्द्रित हुन थाल्यो किन कि उनिहरु सबैलाई एउटा साचो लिडरको आवश्यस्कता थियो जस्ले इस्लाम र मुस्लिम समाजलाई दुःख र पीडा हुदाँ हुँदै पनि आफ्नो शिरमा खुशी खुशी राखोस्, एउटा आवाजको आवश्यकता थियो जस्को सामु बोल्न अघि उस्को हैबत देखेर शिर आफै निहुरियोस्, एउटा सोचको आवशयकता थियो जस्को सोच इमाम अहमद रजाको सोच र सम्पुर्ण बुजुर्गाने दिनको सोचको एउटा झलक होस्, एउटा नवी ए करिम सल्लल्लाहु अलैही वसल्लमको साचो प्रेमीको खाचो थियो जस्लाई देखेर खुदाको याद आओस र यो सम्पुर्ण खुबी हाम्रो पिर व मुर्शिद मुफ्ती ए आजमे नेपाल शेर ए नेपाल अलैहिर रहमा भित्र थियो । त्यसैले प्रतिष्ठावानले उनिलाई आफ्नो आँखामा सजाए, नजर भएकाले आफ्नो मनमा बसाले, सोच भएकाहरुले आफ्नो मस्तिष्क मा सजाए, खोज गर्नेहरुले आफ्नो कार्यमा, बोलीमा बसालेर

आफ्नो सच्चा काइद र लिडर माने साथै हरेक कुराको लागि उहाँ तर्फ नै आफ्नो सोच र नजर राख्न थाले । देशको त्यो भाग जहाँ केही पनि थिएन, न त्यहाँ तबलिग र अकाइदे एह्ले सुन्नत र इस्लामी सोचको सहि परिचय थियो, जहाँ एह्ले इस्लामको कुनै समूह पुगेनन्, त्यसता ठाउँमा सबै भन्दा पहिला हजरत शेर ए नेपालले आफ्नो कदम बढाए अनि आफ्नो सोच र मेहनतका साथ सके सम्म त्यहाँका बद अकिदाबाट त्यो समाजलाई बचाए र मस्लके आलाहजरत को झण्डा त्यहाँ लह्राउन थाले । मकतब, मस्जिद र मदर्साको बुनियाद हालेर आफ्नो विद्यार्थी र ओलमालाई त्यहाँ पठाए अनि बल्ल दोश्रो ठाउँ तर्फ आफ्नो अनुहार फेरे । जीवनकाल भरी हजरत शेर ए नेपाल सदैव इस्लामलाई फाइदा पुग्ने कार्य, इस्लामी आस्था को बचाउ गर्न र मुस्लिमहरु को दिनी र सामाजिक मसाइल हल गर्नको लागि सधै तत्पर रहे ।

## हजरत शेर ए नेपालको दिनी योगदानहरु

हुन त धेरै भागमा बिभाजित छ तर तिनिहरु मध्ये सबै भन्दा धेरै त्यो चार भाग रहेका छन् :

### १. शैक्षिक:

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको शैक्षिक कार्य द्वारा नेपालमा त्यो इन्क्लाब भयो जसबाट आज सोचका मालिक, समयमा चर्चित ओलमा, फाजिल, खतिब, शाएरहरु को एउटा यस्तो फौज उम्मत र मिल्लतको हवाला गर्दिनु भयो इस्लामी आस्था र आचरण को रक्षा गर्न आफ्नो तन, मन र धन सुम्पिन सदैव तत्पर बनि राखे । कोइ फिक्हका माहिर छन् भने कोइ इल्मे हदिषका, कोइ सोच र नजरको बाटोमा लागेका छन भने कोइ अह्ले सुन्नतको एउटा पहिचान बनेका छन, कोइ मुफक्किर छन् कोइ मुहक्किक र मुदब्बिर, कोइ मुफ्ती छन् त कोइ बयानका संसारको मालिक । यो सबै हजरत शेर ए नेपाल म कै कार्यबाट भएका हुन् ।

## २. तकरिर र बयानः

हजरत शेर ए नेपाल रहमतुल्लाह अलैहले बयानबाट अह्ले सुन्नत को यस्तो मार्ग देखाउनु भयो जसबाट हर एक व्यक्ति सोच्नमा बाध्य हुन पुग्यो र अन्ततः आफ्नो यस्तो हिम्मत भएको खतिब माथि गर्व महसुस गर्न थाले। तबलिगको अहम भागहरुमा बयान द्वारा नेपालको भुमीमा हुने नराम्रा आचरण र खुराफातलाई निकै कम गर्नुका साथै नबवि आचरणको दीप पनि जलाइ राख्नु भयो। बदमजहबको मकर र फरेबबाट सवैब मुस्लिमहरुलाई सचेत बनाइ राख्नुका साथै उनिहरु संगको मिल्जुलबाट हुने घाटाको बारेमा अवगत गराई राख्नु भयो।

धेरै यस्ता व्यक्ति जस्ले दाढि काट्थे उनिहरुलाई दाढि राख्ने बनाए, सुन्नतको एउटा पहिरन लगाए साथै जुन ठाउँमा मस्जिद विरान हुन्थ्यो त्यहाँका व्यक्तिहरुलाई नमाज रोजा को सवाब र नपढे भोग्न पर्ने अजाब बारे सुनाएर मस्जिदलाई आबाद र त्यहाँका व्यक्तिहरुलाई नमाज रोजाको पाबन्द बनाए।

## ३. मुनाजराः

हजरत शेर ए नेपालले दिन ए इस्लामको निम्ति र अल्लाह र उस्को रसुलको इज्जत र प्रतिष्ठा माथि भएको हम्ला माथि जवाफी रुप दिन मुनाजरा पनि गर्नु भयो जसले गर्दा अह्ले सुन्नतले धेरै ठुलो बिजय प्राप्त गर्यो। धेरै यस्ता व्यक्तिको जो पथभ्रष्ट भइ सकेका थिए र घटिया फिर्का वारियत फैलाउने समूहद्वारा कुफृया अकिदा मान्ने समेत भएका थिए उनिहरुलाई सहि बाटो देखाउन साथै उनिहरू पनि गुमराह र बातील फिर्काबाट तौबा गरेर अह्ले सुन्नतको साँचो मजहबमा आए।

## ४. फतवा दिनुः

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह सन् २०१५ सम्म जामीआ हनफिया गौषिया मा शिक्षक को हैसियतले बस्नु भई तेही पाठ्यक्रमलाई निरन्तरता दिनु

भयो। जब सम्म त्यहाँ रह्नु भयो आफ्नो व्यस्तता हुँदै पनि इफ्ता र कजा को जिम्मेवारी निकै राम्ररी निर्वाह गर्नु भयो। मलाई जहाँ सम्म ज्ञात छ नेपालमा सबै भन्दा पहिलो मुफ्ती र सबै भन्दा ठूलो आलिम उनी नै थिए। तपाईको शैक्षिक उपलब्धि र प्रतिष्ठा बारे ठुला ठुला ओलमाले पनि मान्नु भएको छ।

अह्ले सुन्नत वल जमाअतका ठुला मुहक्किक जामिया अशरफिया मुबारकपुरका पुराना प्रिन्सिपल ले हजरत शेर ए नेपालको इन्तेकाल पछि भन्नुभएको थियो किः

नेपालको सबै भन्दा ठुलो आलिम वहाँ नै हुनुहुन्थ्यो।

## शेर ए नेपालका खलिफाहरु

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहका खलिफाहरु मध्ये प्रख्यात खलीफाहरुको नाम यस प्रकार रहेको छ :

- पिरे तरिकत काजी ए शरअ बिहार मुफ्ती अब्दुल हफिज अलैहिर रह्मा।
- पिरे तरिकत हजरत मौलाना सैयद अफ्सर पाशा उस्मानाबाद।
- हजरत शैख जुनैद बिन अवाद बिन मरइ बिन हसन अल्हुसैनी बगदाद शरिफ।
- नबिरए आलाहजरत मौलाना तस्लिम रजा खाँ बरेली शरिफ।
- अबुल हक्कानी अल्लामा हुसैन अहमद बरकाती रहमतुल्लाह अलैह।
- शहजादए शेर ए बिहार मुफ्ती अर्शद अलि साहब बिहार।
- नाइबे शेर ए नेपाल हजरत मुफ्ती अह्मद हुसैन बरकाती।
- मुफ्ती मुजिबुर रह्मान बरकाती।
- हजरत अल्लामा मुफ्ती अजिजुर रह्मान बरेली शरिफ।

- जानशीने हजरत शेर ए नेपाल शेहजाद ए शेर ए नेपाल अल्लामा जियाउल मुस्तफा बरकाती ।
- शेहजाद ए शेर ए नेपाल मौलाना फिदाउल मुस्तफा बरकाती ।
- मुफ्ती आरिफ रजा बरकाती, लोहना शरिफ ।
- मुफ्ती साजिद रजा बरकाती, लोहना शरिफ ।
- हजरत मौलाना इक्रामुद्दिन अजहरी, पोखरा ।
- हजरत मौलाना फिरोज बरकाती, दुलेगौंडा ।
- सुफि मोअतदिन बरकाती, दुलेगौंडा ।

## मान र प्रतिष्ठा

अल्लाह तआलाले हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई यस्तो मान र प्रतिष्ठा, इज्जत र शोहरत, ज्ञान र अडिगता, सुन्दरता र सम्मान प्रदान गर्नु भएको थियो कि उहाँले आफ्ना त आफ्ना गैरलाई समेत माया र प्रेमको भाव संग व्यवहार गरेको पाईन्थ्यो । जुन व्यक्तिले अल्लाह कै लागि आफ्नो सोच र चाहनालाई त्याग्दिए अल्लाह तआलाले उस्को लागि त्यो प्रतिष्ठा त्यो सम्मान त्यो मान र त्यो इज्जत प्रदान गर्ने गर्दछ्न कि सम्पुर्ण जीव उसैको गुण गाउन लाग्दछ्न्, हरेक व्यक्ति त्यो ब्यक्तिलाई मान र सम्मानको भावले हेर्न थाल्दछ्न् । ओलमा होस् या अवाम, खानकाहका सज्जादा नशिन होस् या मस्जिद मदर्साका आलिम र जिम्मेवार, राज्नैतिक व्यक्तित्व होस् या सोच र फिक्र राख्ने महानुभाव, धनी होस् या गरिब सबैलाई हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह एकै भावले हेर्ने गर्द थिए ।

मिस्र र बगदाद का शैख, हिन्द र नेपालका ओलमा, मारहरा का सैयदहरु, बरेलीका मशाएखहरु, हरेक खानकाह र हरेक दर्सगाहबाट एकै प्रतिष्ठा र कुबुलियत प्राप्त गरेका छन् र हर एक वहाँ अलैहीर रह्मा को इज्जत र

प्रतिष्ठालाई जान्दछन् ।

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह जहाँ जान्द्र भयो त्यही मान र प्रतिष्ठाबाट सम्मानित हुनु भयो । हरेक ठाउँ अल्लाह को नबि सल्लल्लाहु अलैही वसल्लमको सुन्नतको मोति फैलाउदै गए, बाटोमा प्रेम र मायाको सुगन्ध बाड्दै गए, जुन ठाउँ र गल्लीबाट प्रवेश गर्थे आफ्नो छाप छोड्दथिए, हरेक मनलाई अल्लाह को नबिको प्रेमबाट सुगन्धित बनाई दिए, हुन पनि अल्लाह को नवी को असल प्रेमी पनि त्यही व्यक्ति हुने गर्दछन् जस्को प्रेमबाट मन र मस्तिष्क, बाटो र घर मह्किन्छ ।

हजरत शेर ए नेपाल अलैहिर रह्माको प्रतिष्ठा र इज्जतलाई हुजुर सैयदुल ओलमा, हुजुर अह्सनुल ओलमा, ताजुश्शरीअह, फकिहे मिल्लत, सुफि निजामुद्दिन, जमाले मिल्लत, अल्लामा कमर रजा, अल्लामा तह्सिन रजा, हुजुर मुहद्दिषे कबिर, अल्लामा तस्लिम रजा, मुफ्ती मुजिब अश्रफ, हुजुर शम्शुल औलिया, हुजुर गयासे मिल्लत, हुजुर गुल्जारे मिल्लत, मन्नानी मिया, सम्नानी मिया, काइदे मिल्लत, मुफ्ती निजामुद्दिद अशरफिया, हुजुर हाफिजे मिल्लत, हुजुर शेर ए बिहार जस्ता ठुला ठुला मशाएखले सधै आफ्ना बयान र लेखमा सुन्दर उपाधीबाट याद गरे ।

हजरत अलैहिर रह्माको इन्तेकाल पछि भारतका ओलमाले जुन तरिकाबाट अल्काब र उपाधीबाट हज्रत रह्मतुल्लाह अलैहलाई याद गरेका थिए त्योबाट पनि हजरत शेर ए नेपालको प्रतिष्ठा बारे अन्दाज लगाउन सकिन्छ कि ओलमा बिच उहाँ को के मकाम थियो ।

## प्राप्त गरेका अवार्ड

*(क) काइदे एह्ले सुन्नत अवार्ड*

काइदे अह्ले सुन्नत, मुफक्किरे इस्लाम, मुनाजिरे एह्ले सुन्नत हजरत अल्लामा

अर्शदुल कादिरी अलैहिर रह्मा भारतबाट चम्केका त्यो तारा हुन् जस्को किरण संसारको हरएक मुलुक सम्म पुगेको थियो । जस्को लेखबाट सयौं गैर अकिदावाला एह्ले सुन्नतको दामनमा आएका थिए भने आफ्नै अकिदा वालाको अकिदाले झन् उच्च अडिकता र प्रतिष्ठा प्राप्त गरेका थिए। यस्का व्यक्तित्व कि जब बोल्नु हुन्थ्यो वहाँको हर एक शब्दबाट ज्ञान र हिक्मतका फुल निक्लिन्थ्यो, उनै बुजुर्गको बार्षिक उर्समा हजरत शेर ए नेपाललाई १५ सफर १४३८ हिजरी अर्थात १६ नोभेम्बर सन् २०१६ बिं स. २०७३ मङ्गसिर १ गतेमा "काइदे एह्ले सुन्नत अवार्ड" प्रदान गरिएको थियो ।

*(ख) शाह बरकातुल्लाह अवार्ड*

मारह्रा शरिफ औलियाहरुको शहर हो, जस्को एक गुम्बद तल ७ कुतुबहरु सुतेका छन् जो पुरानो समयबाट नै रुहानी केन्द्रको रुपमा रहेको छ। त्यही भुमिमा बरकाती सिल्सिला का निर्माणकर्ता सैयदुस सादात, कुतुबुल अक्ताब सैयद शाह बरकातुल्लाह अलैहीर रह्मा पनि आराम गरेका छन्। त्यही भुमिसंग हजरत शेर ए नेपाल निकै प्रेम र माया गर्ने गर्थे, यही भुमिबाट वहाँ रह्मतिल्लाह अलैह को रुहानी सफर शुरु गर्नुका साथै यहि खानकाहको तीन बुजुर्गबाट वहाँ रह्मतुल्लह अलैहले खिलाफत पनि पाउनु भएको थियो । इमामे सिल्सिलाको मुकद्दस व्यक्तित्व तर्फ इशारा गर्दै रबिउल अव्वल १४३८ अर्थात २०१६ डिसेम्बरमा कतारको भुमीमा "शाह बरकातुल्लाह अवार्ड" प्रदान गरिएको थियो ।

*(ग) शेर ए बेशेह एह्ले सुन्नत अवार्ड*

१३१९ हिजरीमा लख्नउमा एउटा यस्तो तारा उदायो जस्को चमकबाट पूरा एह्ले सुन्नत नै नुर नुर हुन पुग्यो । त्यही सिताराको नाम आमाबुवाले मुहम्मद हश्मत अलि खाँ राखेका थिए भने पहिलो फतहमा हुजुर आलाहजरत अलैहिर रह्माले अबुल फतहको उपाधी प्रदान गर्नु भएको थियो र अकाबिरे एह्ले सुन्नतले शेर ए बेशेह सुन्नतको उपाधी प्रदान गरेका थिए। त्यही ठुलो बुजुर्ग

तर्फ इशारा गर्दै रबिउल अव्वल १४३८ हिजरी अर्थात डिसेम्बर सन २०१६ मा एउटा तन्जिम जमाअत रजा मुस्तफा कतार को तर्फबाट हजरत शेर ए नेपालको कार्य र योगदान हेरे "शेर ए बेशेह सुन्नत अवार्ड" प्रदान गरेका थिए।

*(घ) ताजुश्शरीअह अवार्ड*

आलाहजरतको उलुमका वारिष, मुफ्ती ए आजम का जानशिन, सुन्नीयतका जान ताजुश्शरीअह मुफ्ती अख्तर रजा खाँ अलैहिर रह्मा संग हजरत शेर ए नेपाल निकै प्रेम गर्ने गर्थे। वहाँ रह्मतुल्लाह अलैहको हरेक तह्किक माथी पुर्ण भरोसा राख्ने गर्थे साथै हुजुर ताजुश्शरीअह पनि हजरत शेर ए नेपाल संग उत्तिकै माया राख्ने गर्थे। एक पल्ट नेपालको भुमिमा हुँदा भन्नु पनि भएको थियो कि "मुफ्ती जैश मुहम्मद इस्लामका फौज हुन् आज जो यिन्को झण्डा तल रह्ने छ कयामतको दिन त्यो रसुलुल्लाहको झण्डा तल रह्नेछ"।

त्यही हुजुर ताजुश्शरिअहको व्यक्तित्व संग मंसुब गर्दै २० फेब्रुअरी सन् २०१७ कर्नाटकमा रहेको फखे अज्हर कमिटी द्वारा "ताजुश्शरीअह अवार्ड" पेश गरिएको थियो।

## अन्तिम सफर हरमैन शरिफैन

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले अल्लाह तआला र उस्को हबिब सल्लल्लाहु अलैही वसल्लम संग निकै प्रेम राख्ने गर्दथे। नबि ए पाक सल्लल्लाहु अलैही वसल्लमको जिक्र पनि निकै खुशी र सम्मानका साथ गर्दथे। दैनिक रुपमा दुरुद पढी राख्नु वहाँ रह्मतुल्लाह अलैहको बानी नै थियो। नबि ए करिमको दरबारको प्रेम यति कि सधै त्यहिको बारेमा बयान गर्ने साथ साथै त्यही जाने इच्छुकता देखाउथे। अब रबिउल अव्वलको प्यारो महिनामा सुगन्धको एउटा प्यारो उपहार लिएर उपस्थित भएका थिए प्यारा आशिक ए नबि सल्लल्लाहु अलैही वसल्लम। न उमरको रोक न समयको केही टोक रबिउल अव्वलको प्यारो महिना १४४१ हिजरी सन् २०१९ को

चाद निस्किसकेको थियो । अन्ततः यो मदिना शरिफको जियारत तपाईको जीवनको अन्तिम जियारते हरम साबित भयो ।

## मेरो मुर्शिदको अन्तिम सफर

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह रबिउल अव्वलको महिनामा अल्लाहको खुशीको लागी दिनको तब्लिग गर्न मुम्बइ पुगे । यहि मुबारक महिना जस्मा अल्लाहको नबि जन्मिनु भयो त्यसै मा उहाँ अल्लाह तआलाको घर कआबा शरिफ पुगे त्यहाको सुन्दर वातावरणमा अल्लाह को जिक्र उहाँलाइ खुशी गर्न तवाफ गरे रोजा राखे इबादत गरे । त्यही हालतमा अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमको दरबारमा पुगे त्यहा आफ्नो मनको दास्तान सुनाए , सलाम सुनाए ।

सोहि क्रममा ज्वरो (बुखार)बाट हजरत अलैहीर रह्माको स्वास्थ्य  फरक रुप ले देखिन थाल्यो, ज्वरो जस्को फजिलत बारे हदिषमा छ कि अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लम ले भन्नुभयो जुन् व्यक्ति ज्वरोको हालतमा अल्लाह को शुक्र गर्छ यदि अल्लाह पाक ले उस्लाइ सेहत दिनु भयो भने पहिला भन्दा राम्रो दिनुहुनेछ यदि त्यही हालतमा इन्तेकाल भयो भने उस्को वफात मग्फिरतको हालतमा हुन्छ ।

म भन्दै थिए मदिना ए पाक को सुन्दर वाताबरणमा अल्लाह को शुक्र र नबि ए पाक को दुरूद आफ्नो ओठमा सजाउदै मुम्बइ फर्किए । अब यहाँबाट हुजुर गौसे आजम रदि अल्लाहु अन्हुको कदमे पाक चुम्न बग्दाद जाने टिकट काटी सक्नु भएको थियो । तर किस्मतलाई अरु नै केहि मन्जुर रहेछ ।

बिहीबारको दिन हुजुर शेर ए नेपाल सिकिस्त बिरामी हुनुभयो । वहाँलाई मुम्बइ को अस्पताल मा लगियो त्यहा केहि दिन हजरतलाइ आइ सि युमा नै राखियो । पछि हुजुर शेर ए नेपाल रह्मतुल्लाह अलैहलाइ केहि राम्रो भएको हुनाले उनलाई आइ सि युबाट निकालिएर केहि दिन बाहिर राखिएको थियो ।

केही दिन पछि हजरतको स्थिती एकदम गम्भिर हुन थाल्यो । फेरि उहाँलाइ त्यो अस्पतालबाट लिलावती नामक अन्तर्राष्ट्रिय अस्पतालमा भर्ना गराइयो । त्यहाँ उहाँको दुबै मृगौला फेल भएको रिपोर्ट डाक्टरहरुले देखाए ।

अब हजरतको तमन्ना रहेको थियो कि म आफ्नो देश आफ्नै वतन आफ्नै गाऊमा इन्तेकाल हुन चाहन्छु । सोहि तमन्नालाई प्राथमिकता दिइ वँहा लाइ एम्बुलेन्सको माध्यमबाट नेपाल ल्याउन २४ नोवेम्बर अर्थात २७ रबिउल अव्वल र ९ गते मङ्सिर २०७६ को राती ११ बजे अस्पतालमा डिस्चार्ज गराएर नेपाल तर्फ फर्काइयो । नोवेम्बर २५ को दिन एम्बुलेन्समा हजरत का जेठा छोरा अल्लामाह जियाउल मुस्तफा, भतिज मुफ्ती आरिफ र  युनुस मामु र डाक्टरको एक टिम थियो । दिन भरी कहिले हजरत ले आखा खोल्ने बन्द गर्ने गरि रहेका थिए । एक्कासी लखनउ पुग्नु अघि राती १०:४५ मा हजरत को हालत गम्भिर भएको देखेर बाटैमा गाडी रोकियो । डाक्टरको टोलि आफ्नो पुरै जोर लगाएर हजरतलाई पहिला जस्तै बनाउने कोशिशमा जुटे । गाडीमा एक्कासी एउटा सन्नाटा छायो । रातीको ११.२९ मा सम्पुर्ण संसारका पालन्हार अल्लाह तआलाका बन्दा हाम्रा मुर्शिद हुजुर शेर ए नेपाल यस दुनियाबाट पर्दा फर्माउनु भयो ।

(इन्ना लिल्लाही व इन्ना इलैही राजिउन)

अब एम्बुलन्स केहि घन्टा अघि बढेन । बिहान भयो एकाएक यो खबर सबैको कानमा गुन्जियो । हतार हतार सबै आ-आफ्ना नजिकका व्यक्तिहरुलाई सम्पर्क गर्न थाले । कोहि आफ्नो होश समाल्न नसकेर भुइमा लडे । कोइ आफ्ना आसु थाम्न सकेनन् । कोइ गाडीलाई भगाउदै लोह्ना तर्फ जान थाले । एम्बुलेन्स अब आफ्नो गतिका साथ राती ११ बजे लोह्ना पुग्यो । हजारौ आशिकाने रसुल आफ्ना मुर्शिदको अन्तिम दिदारका लागि तड्पिरहेका थिए । जनाजाह हुनु थियो भोली पल्ट अर्थात २७ नोवेम्बर २०१९ र वि.सं २०७६ मङ्सिर ११ गते दिनको २ बजे ।

हजरतलाई गुसल दिइयो । कफन लगाएर आफ्नो अन्तिम सफर (कबर) तर्फको तयारी शुरु गरियो । कबर तयार भयो । हजरत अलैहिर रह्माको अन्तिम दिदारको लागि अगाडि पिन्डाल लगाइएको थियो । राती पानी का कारण भित्र कोठामा लगियो तर बिहान फेरि अगाडि राखियो। दिउँसो ११ बजे एक्कासी एउटा भिड यसरी लोह्ना आइ पुग्यो मानौ यो मानविय भिड नभइ कुनै अरु नै कुरा को भिड हो। सबैले आफ्नो मुर्शिदको दिदार गरे। अब नमाजे जोहर पढियो। अन्तिम सफरका लागी हजरतलाइ डोलि (ताबुत) मा बसालेर मस्जिद को सेहनबाट हुदै जल्सागाह को स्टेजमा पुर्याइयो। पुर्याउने बेला हर एक आफ्नो बल का साथ हजरत लाइ कान्धा दिने प्रयत्न मा थियो। हजारौ सफल भए पनि तर हजारौ ले आफ्ना आखा ले मात्र त्यो मन्जर हेर्न भ्याए। २७ नोवेम्बर २०१९ र वि.सं २०७६ मङ्सिर ११ गते दिउँसो २:३० हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहको नमाजे जनाजाह हजरतका जेठा छोरा अल्लामा जियाउल मुस्तफा ले पढाए। करिब ४ बजे हजरतलाई माटोको सुपुर्द गरियो। यो मन्जर हजारौले आफ्ना आखाले देखे त्यस्मा म (साजिद अहमद मियाँ) पनि थिए।

हजरतको इन्तेकाल पछि लोह्ना शरिफ जाने क्रममा म द्वारा लेखिएको मनकबत :

**शेर ए रजा शेर ए नेपाल झै पाउने छैनौ कतै !**

**ज्ञानका यस्ता भण्डार पाउने छैनौ कतै !**

**हेर्नेहरु मन खोलेर हेर आज उन्लाई**

**फेरि यस्ता प्यारा अनुहार पाउने छैनौ कतै !**

**नाम नै काफी थियो लखेट्न ति चौबिसलाई**

**रजाका यस्ता तलवार पाउने छैनौ कतै !**

**फर्ज त ठुलो कुरा जस्ले सुन्नत नि छोडेनन**
**आशिक यस्ता नबिको पाउँने छैनौ कतै !**
**साजिद पनि भाग्य मानी ठान्छ आफुलाई**
**मुर्शिद यस्ता संसार भरमा पाउने छैनौ कतै !**

## हजरत शेर ए नेपालका भनाइ तथा आदेशहरु

अल्लाह तआलाले जुन व्यक्तिलाई आफ्नो प्रिय बनाउदछ, उस्को बोलीबाट निक्लिने शब्दहरु निकै मुल्यवान हुने गर्दछन् । कुरआन र हदिष मा पनि अल्लाहका नबिहरु, रसुलहरु, वलिहरु र प्याराहरुका भनाइ र आदेश लेखिएको छ । नेपालवासीहरुको लागि हजरत शेर ए नेपालको व्यक्तित्व कुनै उपकार भन्दा कम होइन । उहाँको बोलीबाट निक्लिएको केही भनाइ र आदेशहरुलाई तल लेख्दैछु ।

हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले भन्नुहुन्छ :

- पाक कार्य गर्नको लागि मस्जिद बनाइन्छ । मेलजुल र मिलनसारको भावनाको साथ मिलेर नमाज पढ्नको लागि मस्जिद बनाइन्छ । इमानलाई मज्बुत बनाउन मस्जिद बनाइन्छ ।
- हजरत मुहम्मद सल्लल्लाहु अलैही वसल्लमले भन्नुभयो यो ढुङ्गा जस्लाइ पुज्ने गर्छौ, यो पुज्न योग्य छैन । पुज्ने योग्य केवल त्यही हो जस्ले जमिन आकाश र सम्पुर्ण शृष्टिको निर्माण गर्यो । यो ढुङ्गा पुज्न योग्य कदापी छैन ।
- खुदा अल्लाह नै हुन्, वहाँ बाहेक कोहि खुदा छैन, इबादत उसैको हुनेछ, केवल उसैको ।
- अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमले जे चाहनु हुन्छ गर्न सक्नु

हुन्छ अल्लाह तआलाले वहाँलाई यो शक्ति प्रदान गर्नु भएको छ।

- जस्ले अल्लाहको नबि सल्लल्लाहु अलैही वसल्लमलाइ अल्लाहको प्रदानले मालिक र सर्वशक्तिमान मान्दैन त्यस्को अकिदा (आस्था) नापाक छ। हाम्रो अकिदा पाक छ, हाम्रो अल्लाह, हाम्रो नबि पाक छन्, हाम्रो नमाज हाम्रो रोजा पाक छ।
- हरेक मस्जिद हरेक मदर्सा इस्लामलाई फाइदा पुर्याउन बनेको हुदैन।
- आला हजरत त्यो ब्यक्ति हो जस्को बराबरमा यो समयमा अरब, अजम, देश बिदेशमा कोइ पनि ब्यक्तित्व देखिएन।
- ठुलालाई ठूलो ठानेर ठूलो भइन्छ। जस्को तक्वा धेरै उसैको प्रतिष्ठा धेरै हुन्छ।
- पहलवानको साथ साथै शक्तिशाली पनि बन।
- धनीको सम्पत्तिबाट मोहित हुनुहुदैन।
- गालीको उत्तर गालीबाट हैन सादापनबाट दिनुपर्दछ।
- सत्यको साथ सत्य व्यक्तिले नै दिनेछ भने झुटको साथ झुठा व्यक्तिले नै दिनेछ।
- मसअलामा लचकता राख्नु, दोश्रो बाटो नाप्नु र सत्यलाई छुपाउनु उचित हुदैन।
- जस्लाई अल्लाहले तौफिक दिन्छन उसैले कुरआन मुटु संग जोडेर राख्दछ।
- शरीअतको कुरा मनबाट मान्नु होस्।
- इस्लाम नाम हो सत्यलाई सत्य र गलतलाई गलत भन्नुको।
- आफ्नो इमानः ज्यान, आफ्नो सन्तान, समाज र राष्ट्र भन्दा पनि धेरै प्यारो

हुनु पर्छ।

- आमा(बुवालाई मायाले हेरियो भने सवाब पाइन्छ र कुरआनलाई मायाले हेरियो भने पनि सवाब मिल्दछ।
- यो कुराको यकिन राख्नुस् कि गौषे आजमको मुरिदको मृत्यु इमानमा हुनेछ, गौषे आजमले यो कुराको ग्यारेन्टी लिनु भएको छ।
- राम्रो कार्य गर्नु अनिवार्य हो।
- सन्तानलाई खुवाउनु पाल्नु र उनीहरु को बेहतर तर्बियत गर्नु अनिवार्य हो।
- एउटा सपना शैतानी हुने गर्छ जुन शैतानको भ्रमबाट हुन्छ र अर्को रह्मानी हुन्छ जुन अल्लाहको तर्फबाट हुन्छ।
- कुनै पनि नबि बराबर कोहि पनि ब्यक्ती पुग्दैन।
- जस्को किस्मतमा हिदायत छ उसलाई कसैले गुमराह गर्न सक्दैन तर जस्को किस्मत मा गुम्राही छ उस्लाई कसैले हिदायत दिन सक्दैन।
- जुन व्यक्तिले पापबाट तौबा गर्दछ, त्यो पापबाट पाक हुन्छ।
- तौबाले त सम्पुर्ण गुनाहलाई मिटाइदिन्छ तर तौबा गर्ने सौभाग्य खुश नसिबले मात्र पाउँछ।
- जुन व्यक्तिले पढ्ने समयमा मेह्नत गर्दछ, पछि गएर उसैले कामियाबी प्राप्त गर्दछ।
- बिरोधिलाई जवाब दिनुमा उल्झिनु भनेको बाटो भुल्नु बराबर नै हो।
- जब सम्म क्षमता हुनेछ, चुप बस्नु उचित हुदैन। सके सम्म सत्यलाई खुलाउनु फर्ज हो।
- मुर्तद (बातिल फिर्का) संग मिल्नु हजारौ काफिर संग मिल्नु भन्दा नराम्रो हो।

- अल्लाहका केहि नेक र मुकद्दस बन्दाहरु यस्ता पनि छन् कि जो सदैव आफ्नो चाहनालाई शरीअतको लागि छोड्दिने गर्दछन् ।
- मसअला जस्तो पाए त्यस्तो व्यक्ति संग सोध्नु हुदैन । त्यो व्यक्ति संग सोध्न पर्दछ जसमाथी सबै आलिमले भरोसा राखेका हुन्छ्न ।
- आलिम कुरआन र हदिषको आवश्यक मसअला जान्ने र त्यस्को अनुशार अमल गर्ने व्यक्तिलाइ भनिन्छ ।
- आलिमको लागि इल्म हुन जरुरी छ, मक्तब मदरसामा हुनु कुनै ठुलो कुरा होइन ।
- आलिम जो सुकै होस् चाहे मकतब को होस् या मदरसाको या दारुल उलुमको, उस्को आदर गर्नु आवश्यक हुने गर्दछ ।
- मुस्लिमहरु ! अहिले पनि आफ्नो होश सम्हाल, आफ्नो र गैरलाई चिन । जो तिम्रो अकिदा अनुसार छैनन् या तिम्रो मजहब अनुसार छैनन् तिनीहरु तिम्रा भाइ होइनन ।
- तौबा होस् त पक्का मन बाट, मक्कारी या रियाकारीबाट नहोस् ।
- रसुलुल्लाह सल्लल्लाहु अलैही वसल्लम माथि सलाम पढ्नु पनि इबादत हो । रसुल माथि दुरुद पढ्नु पनि अल्लाहको इबादत हो ।
- व्यक्तिले जो संग प्रेम गर्दछ, उस्को हश्र उसै संग हुनेछ ।
- जन्नती त्यो ब्यक्ति हो, जस्ले अल्लाहको पनि मान्दछ र उस्को रसुलको पनि मान्दछ ।
- मुस्लिमहरुलाई आगाह गर्दछु कि यस समयमा आलाहजरतलाई आफ्नो मुक्तदा र आफ्नो अग्रज मानोस् र बुझ्ोस् ।
- आला हजरतको मस्लकबाट हट्नु भनेको गुम्राही र बेदीन हुनु हो ।

- गल्तिमा टोक्नु अनिवार्य हो ।
- सम्पुर्ण कुरामा सबै भन्दा प्यारो इमान हो ।

## करामाते शेर ए नेपाल

### मनको कुरा मुर्शिदको बोलीमा

हजरत अल्लामा मुफ्ती रह्मतुल्लाह साहबले भन्नुभएको छ कि “एक पल्ट मौलाना अबुल हक्कानी, हाफिज आबिद हुसैन र स्वयम उनि हजरतलाई भेट्न लोह्ना शरिफ रातिको समयमा पुगेका थियौं । हजरत शेर ए नेपाल संग भेटघाट गरे अनि खाना खाएर आफ्नो कोठा तर्फ लागे । मन थियो त्यति लामो सफरबाट आएका छौ, अब खानकाहलाई पनि हेरेर जाऔ । तर रातीको अन्धकारले गर्दा देख्न पाईएन, केही भाग मात्र हेरियो त्यो पनि सहि तरिकाबाट देखिएन । त्यसैले राति नै मन बनाएका थियौ कि बिहान विस्तारमा हेर्नेछौ । भोलि पल्ट फजरको नमाज पछि हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह ले चियाको लागि कसैलाइ पठाउनु भयो, हामीले आउदैछौ भन्ने संन्देश पुर्यायौ । मन यही थियो खानकाह हेर्ने । फेरि हजरतले भाइलाई पठाउनु भयो, हामिहरु आदेश पाएर पुगेउ । पुग्ने बित्तिकै हजरतले भन्नु भयो “जाउँ पहिला खानकाह हेरेर आऔ अनि बल्ल चिया पिऔला” अल्लाहु अक्बर ! हामी सबै सोचेका सोचै भयौ, न हामीले कसैलाइ भनेका थियौ न हाम्रो कुरा कसैले सुनेको थियो । निःशन्देह ! हजरत रह्मतुल्लाह अलैह एउटा कश्फ भएको वलि हुनु हुन्थ्यो ।

एक पल्ट मौलाना अबुल हक्कानी का छोरा हजरतलाई भेट्न र मुरिद हुने इच्छा लिएर जनकपुर आएका थिए । जनकपुरमा हजरतको कोठामा पुग्नासाथ सलाम गरेर अहिले राम्रो संग बस्नु पनि भएको थिएन कि हजरतले मनको पाना हेर्नुभएर भन्नुभयो, “तपाई मुरिद हुनको लागि आउनु भएको हो ?” यति

सुन्नासाथ मौलाना तह्सिन चकित हुँदै सोच्नु भयो कि मैले त मुरिद हुने बारे कसैसंग सल्लाह गरेको थिएन, हजरतलाई कसरी थाहा भयो । तब वहाँ ले भन्नुभयो कि निश्चित रुपमा हजरत एउटा साहिबे कश्फ बुजुर्ग हुनुहुन्थ्यो ।

## वर्षा रोकियो

सन् २००० इस्विको कुरा होला, जनकपुरमा नेपाल टेन्ट हाउसको अनिस अहमदको बुबाको इन्तेकाल भयो जो हजरत शेर ए नेपाल संग निकै प्रेम र माया राख्ने गर्दथे । वर्षाको मौसम थियो र जुन दिन इन्तेकाल भएका थिए त्यो दिन ठुलो पानी परिरहेको हुनाले कफन र दफनमा ढिलो हुन थाल्यो । घरका ब्यक्तिहरुलाई पनि निकै चिन्तित हुनथाले । सोही क्रममा जनाब अनिस अहमद र केही व्यक्तिहरु हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैह माझ उपस्थित भए र भने कि “हजरत पानी निकै ठूलो परिरहेकोछ, रोकिने कुनै ठेगाना नै छैन, पहिला देखि परि रहेको थियो र कति पर्ने छ भन्ने पनि थाहा छैन, अब हामी के गरौ ?” यति मै हजरत शेर ए नेपाल रहमतुल्लाह अलैहले आफ्नो मुखबाट भन्नुभयो कि “कफन दफनको तयारी गर, कबर खन्न थाल, इनशाअल्लाह पानी रोकिनेछ” जसरी नै हजरतको मुखबाट यो कुरा निक्लियो त्यहा भएका हरेक व्यक्ति गवाह छन् कि त्यस्को केही मिनेट मा नै वर्षा रोकिएको थियो । अब ढुक्कका साथ सलातो सलाम पढदै जनाजा कबरिस्तान ल्याइयो । हजरत रह्मतुल्लाह अलैहले आफैले जनाजा पढाउनु भएको थियो ।

## खानामा बरकत

लहान इद्गाह मुहल्लामा दारुल उलुम बरकातिया मदिनतुल उलुमको खजांची जनाब इज्हारुल हक उर्फ मुन्ना पान पसल को घरमा छोरीको बिहे थियो । निकाह पढाउनको लागि हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहलाई दावत दिइएको लगतै, हजरतले स्विकार्दै त्यहा पुग्नु भयो । जन्तीमा सय जना आउने कुरा भएको हुनाले त्यसै हिसाबले खाना पनि बनाइएको थियो । तर घरका

व्यक्तिको लागि समस्या त्यो बेला आयो जब सयका साटो दुई सय जना जन्तीमा आए। अब त्यो घरका व्यक्ति निकै दुःखी भए कि आज उनिहरुको इज्जतको जनाजा निक्लिनेछ।

यति मै हजरत शेर ए नेपाल रह्मतुल्लाह अलैहले वहाँलाई सोधे कि यति दुःखी किन भएको छौ ? कुरा के हो ? उहाँले भन्नुभयो कि हजरत सय जना जन्तीमा आउने कुरा भएकोले त्यही हिसाबले खाना पकाएका थियौ, दस बीस जना तल माथि भएको भए केहि फरक पर्दैन थियो यहाँ त पूरा सय जना नै बढी रहेका छन्। अब हामि यी सबैलाई कसरी खाना खुवाउने छौ भन्ने केहि सुर छैन, खुवाए भने कताबाट खुवाउनु न खुवाए आज जत्तिको हाम्रो बेइज्जत कहिले हुनेछैन। अब जन्तीलाई फर्काउनु पनि उचित हुदैन। हजरत रह्मतुल्लाह अलैहले भन्नुभयो "चिन्ता न लिनुस्, जब सम्म मैले भन्दिनँ तब सम्म कसैलाइ खाना न दिनुस्, खाना तयार भए पछि मलाई बोलाउनु होला"। खाना पाके पछि हजरत शेर ए नेपाल त्यहा जानुभयो र भाडा अगाडि केही पढेर दुआ गर्नु भयो। तपाई को दुआको बरकत कि पूरा जन्तीले खाना खाए पनि, खाएर थपे पनि साथै घरका व्यक्तिहरुले भन्दछन् कि त्यति बेला पनि खाना बचेकै थियो। सबै कुराबाट फारिग भए पछि हजरत सामु घरका व्यक्तिहरु उपस्तिथ हुदाँ हजरत मुस्कुराउदै भन्नुभयो कि खाना पुग्यो कि पुगेन ? उत्तरमा घरका व्यक्तिहरुले जवाफ दिए कि हजरत तपाईको दुआ र करामतले गर्दा सबैले खाना खाए पछि पनि खाना बचेको थियो।

## घरबाट जिन्नात भाग्नु

धनुषा जिल्ला हजरत शेर ए नेपाल संग प्रेम गर्नेहरुको जिल्ला हो, त्यहाको हरेक व्यक्ति हजरत शेर ए नेपाल संग प्रेम गर्ने गर्दछन्। त्यसै जिल्लाको कुरा हो कि जनाब अब्दुश्शकुर साहबको घरमा जिन्नाती असरात निकै हुने गर्दथ्यो। जिन्नातहरुले घरका व्यक्तिहरुलाई सदैब पीडा दिएर उनिहरुको सुख र चैनलाई समेत छिनेका अब्दुश्शकुर निकै दुःख र पिडाको जीवन व्यतित गर्दै

धेरै बाबा र मस्तानलाई समेत घर देखाइ सकेका थिए। एक दिन हजरत शेर ए नेपालको आमद सोही मुहल्लामा भयो जहाँ उनी बस्दथे। जनाब अब्दुश्शकुर पनि सोहि बेलामा हजरत सामु उपस्थित भएर आफ्नो पूरा घटना बताए। हजरत शेर ए नेपाल उन्को घर जानुभयो र दुआ गर्नु भयो अनि फर्कनु भयो। अल्लाहु अक्बर हजरत अलैहिर रह्मा कदम स्पर्श मात्र के भएको थियो, त्यो घर मा भएको सबै जिन्नाती असर सक्कियो र त्यस पछि कहिले पनि त्यस्तो भएन।

# मनकबते हजरत शेर ए नेपाल

अहले सुन्नतका सिपाहि हजरते शेर ए नेपाल
आलाहजरतका दिवाना हजरते शेर ए नेपाल

मस्लके रजा छ कायम पहाडमा तिम्रै दैनले
मुफ्ती ए आजम नेपाल हजरते शेर ए नेपाल !

जीवन भर सुन्नत छोडेन,खुसी पार्न आकालाई
प्यारो मुस्तफाको प्रेमी, हजरते शेर ए नेपाल !

अहमद रजाको तल्वारको धार हुन् नेपालमा
हाफिजे मिल्लतको अमानत, हजरते शेर ए नेपाल !

के भनम् वहाँको बारे, आरिफे कामिल उनी
गौष र ख्वाजाको अता, हजरते शेर ए नेपाल !

शिक्षक भनम् मुर्शिद भनम् या समयको एक वलि
बोल्ने शब्द रहेनन् कुनै हजरते शेर ए नेपाल !

साजिदका शब्द स्विकार्य होस्, मुर्शीद्को दरबारमा
मेरा अख्तर, मेरा मुर्शिद हजरते शेर ए नेपाल !

*लेखक : साजिद अहमद बरकाती (संकलक)*

# मनकबते हजरत शेर ए नेपाल

रबले नवाजेको छ, शेर ए नेपाललाइ
दिनमा खटाएको छ, शेर ए नेपाललाइ

रब र रसुलको वाणी मिल्छ सबै वहाँमा
यो सब दिलाएको छ, शेर ए नेपाललाइ

दौलत दिनको इनले हर ठाउँ बाटेका छन
यो काम मिलेको छ, शेर ए नेपाललाइ

मुहार घाम जस्तो व्यहार आम जस्तो
रबले श्रृङ्गारेको छ, शेर ए नेपाललाइ

वहाँको सारा जीवन बितेछ दिनको काममा
जिम्मा यहि मिलेछ, शेर ए नेपाललाई

मुरिद बरकातको लश्कर खडा गरे
इच्छा कहाँ पुगेछ, शेर ए नेपाललाइ

*लेखक : हाजी युसुफ पालपाली, चितवन*

# शजरा ए आलिया कादरिया बरकातिया

या इलाही रहम् फरमा मुस्ताफा के वास्ते
या रसुलल्लाह करम् किजिए खुदा के वास्ते

मुश्किलें हल कर शहे मुश्किल कुशा के वास्ते
कर बलाएं रद शहिदे करबला के वास्ते

सैयदे सज्जाद के सद्के मे साजिद रख मुझे
इल्मे हक दे बाकिरे इल्मे हुदा के वास्ते

सिद्क सादिकका तसद्दुक सादिकुल इस्लाम कर
बे गजब राजी हो काजिम और रजा के वास्ते

बहरे मारुफ व सरि मारुफ दे बे खुदसरि
जुन्दे हक मे गिन जुनैदे बासफा के वास्ते

बहरे शिब्ली शैर ए हक दुनिया के कुत्तो से बचा
एक का रख अब्दे वाहिद बेरिया के वास्ते

बुल फरहका सद्का कर गमको फरह दे हुस्नो सअद
बुल हसन और बुसइदे सअद जा के वास्ते

कादरी कर कादरी रख कादरियों में उठा
कद्र अब्दुल कादिरे कुदरत नुमां के वास्ते

अह्सनल्लाहु लहु रिजकन से दे रिज्के हसन
बन्दए रज्जाक ताजुल अस्फिया के वास्ते

नसरबि सालेह का सद्का सालेहो मन्सुर रख
दे हयाते दि मुहिय्ये जाँ फिजा के वास्ते

तुरे इर्फानो उलुव्वो हम्दो हुस्ना व बहा
दे अलि मुसा हसन अहमद बहा के वास्ते

बहरे इब्राहिम हम पर नारे गमगुल्जार कर
भिक दे दाता भिकारी बादसाह के वास्ते

खानए दिलको जिया दे रुए इमाँ को जमाल
शह जिया मौला जमालुल औलिया के वास्ते

दे मुहम्मद के लिए रोजि कर अहमद के लिए
ख्वाने फद्लुल्लाह से हिस्सा गदा के वास्ते

दिन व दुनिया के हमें बरकात दे बरकात से
इश्के हक दे इश्किये इश्क इन्तिमा के वास्ते

हुब्बे अह्ले बैत दे आले मुहम्मद के लिए
कर शहिदे इश्क, हम्जा पेशवा के वास्ते

दिलको अच्छा तनको सुथरा जान को पुरनुर कर
अच्छे प्यारे शम्सु दिं बद्रुल उला के वास्ते

दिलको अछ्छा तनको सुथरा जानको पुर नुर कर
सुथ्रे प्यारे नुरे हक शम्शुद दुहा के वास्ते

दो जहाँ मे खादिमे आले रसुलुल्लाह कर
हजरते आले रसुले मुक्तदा के वास्ते

नुरे इमाँ नुरे इर्फां नुरे कब्रो हश्र दे
बुल हुसैने अहमदे नुरि जिया के वास्ते

दे दियात दो जहाँ मे हमको ए रब्बे कदिर
हजरते मेह्दी मियाँ बा अता के वास्ते

हमको औलादे रसुले पाकका रख्ना गुलाम
शाहे औलादे रसुले बाजिया के वास्ते

कौलो फेलो हाल सब मे हम्को तु सच्चा हि रख्
शह मुहम्मद सादिके मर्दे खुदा के वास्ते

सब कि किस्मत कि बुराइ नेकि से कर्दे बदल
हजरते बुल कासिमे खैरुल हुदा के वास्ते

हुब्बे औलादे रसुले पाक दे दिल मे रचा
शाहे औलादे रसुले रह नुमा के वास्ते

नामे नामि जिनका है हजरत गुलामे मोहियूयुद्दिन
बख्श दे हमको तु इन्के इत्तेका के वास्ते

नुरे अहमद जोफिगन हो हम पे ए रब्बे अजिज
नुरे अहमद आशिके मर्दे खुदा के वास्ते

मुस्तफा व मुरतजा राजी हो हमसे ए खुदा
मेरे मौला शाह सैयद इर्तजा के वास्ते

मुझको राहे मुस्तफा पर गामजन रख्ना मदाम
मेरे मुर्शिद शाह आले मुस्तफा के वास्ते

या इलाही बक्ष्हे हजरत मुस्तफा हैदर हसन
हुस्नो सिफ्वत कर अता उन्के गदा के वास्ते

दो जहाँ कि नेअमतो से हमको माला माल कर
हजरते जैश ए मुहम्मद बु जिया के वास्ते

सद्का इन आया के दे छः ऐन इज इल्म व अमल
अफ्वो इर्फा आफियत प्यारे रजा के वास्ते

# लाखों सलाम

मुस्तफा जाने रहमत पे लाखों सलाम
शमए बज्मे हिदायत पे लाखों सलाम

शहरे यारे इरम ताजदारे हरम
नौ बहारे शफाअत पे लाखों सलाम

हम गरीबों के आका पे बेहद दरुद
हम फकीरों के सरवत पे लाखों सलाम

पतली पतली गुले कुद्स की पत्तियाँ
उन लबों की नजाकत पे लाखों सलाम

उनके मौला के उन पर करोड़ो दरुद
उनके असहाब व इज्जत पे लाखों सलाम

कर्बला की जमी और इमाम हुसैन
उस शहीदे मोहब्बत पे लाखों सलाम

गौसे आजम इमामुत्तुका वंनुका

जलवए शाने कूदरत पे लाखों सलाम

मेरे उस्तादो माँ बाप भाई बहन

अहलो वुल्दो अशिरत पे लाखों सलाम

एक मेरा ही रहमत में दावा नहीं

शाह की सारी उम्मत पे लाखों सलाम

दाल दी कल्ब में अजमते मुस्तफा

सयूयदी आला हज़रत पे लाखों सलाम

जिनकी हर हर अदा सुन्नते मुस्तफा

ऐसे पीरे तरीकत पे लाखों सलाम

काश महशर में जब उनकी आमद हो और

भेजें सब उनकी शौकत पे लाखों सलाम

मुझ से खिदमत के कुदसी कहें हाँ रजा

मूस्तफा  जाने रहमत पे लाखों सलाम

## सहयोगी महानुभावहरु

किताव प्रकाशनमा अल्लाहको खुशीको निम्ति सहयोग पुऱ्याउनु भएका महानुभावहरु :

१) रफिक मियाँ (कतार)
२) निजामदिन मियाँ (वेल्जियम)
३) फजिल अहमद (इटाली)
४) यासिर मियाँ (जापान)
५) सविन मियाँ (अष्ट्रेलिया)
६) मोहम्मद् सेफ (नेपालगञ्ज)
७) नजिम शेख (टाँडी)
८) बसिर अहमद् (कतार)
९) अजिम बरकाती (नारायणगढ)
१०) मोहम्मद इक्राम (दुवई)
११) मुवारक बरकाती (अमेरिका)
१२) असिन खान
१३) यासिन खान
१४) नसिब शेख
१५) समिरा खातुन
१६) अब्दुल्लाह मियाँ
१७) महम्मद ऐनुल हक
१८) रुक्साना बरकाती

## संकलकका केही अन्य पुस्तकहरु :

### रमजानको उपहार

यो उर्दु किताब "रमजानको तोह्फा" को नेपाली अनुवाद हो। इस्लामी महत्वपूर्ण महिना रमजानमा बसिने रोजा सम्बन्धि हरेक बिषयबस्तुलाई नेपाली पाठकहरु को निम्ती सरल तरिकाले उल्लेख गरिएको किताब जस्को नेपालि नाम "रमजानको उपहार" र ाखिएको छ। किताबको PDF प्राप्त गर्न +९७७ ९८२१२२३३१५५ Whatsapp वा somepeople.sk@gmail.com मा सम्पर्क राख्नु होला।

### इस्लामी महिना र त्यसका बिशेषताहरु

इस्लामी हिजरी पात्रोमा रहेको १२ महिनाको नाम, त्यस्का बेशेषताहरु, त्यसमा घटेका मुख्य घटना, त्यस्मा गरिने इबादतहरु साथै अन्य धेरै बहुमुल्य जानकारी भएको किताब "इस्लामी महिना र त्यस्का विशेषताहरु" जस्को संकलक साजिद अहमद हुन्। किताबको PDF प्राप्त गर्न +९७७ ९८२१२२३३१५५ Whatsapp वा somepeople.sk@gmail.com मा सम्पर्क राख्नु होला।

**नोट :**

इस्लामको तालिम सिख्नु र सिखाउने सबै भन्दा उत्तम इबादतहरु मध्य एक हो। यस्को सवाबको कुनै सिमा नै हुदैन। उल्लेखित किताब सवाब वा इसाले सवाबको निम्ति Publish गर्ने इच्छा भएमा उल्लेखित नंबरहरुमा सम्पर्क राख्न सकिन्छ

+९७७ ९८०७१५६५०७/९८२१२२३३१५५



# जरुरी सूचना

हाम्रै नारायणघाटमा स्थित अल जामीअतुल बरकातिया मदर्सामा बिगत लामो समय देखि भब्यरुपले इस्लामी तालिम हुदै आएको छ। इस्लामी तालिममा : हिफ्ज, केरत तथा दर्से निजामी (मौलाना कोर्स) हुँदैछ। इच्छुक महानुभावहरु आफ्ना बालकहरु को सुनौलो भविस्यको निम्ति यस मदर्सामा भर्ना गराउनु हुन अनुरोध गर्दछौ।

साथै कुनै महानुभावले यस मस्जिद, मदर्सालाई सहयोग गर्ने इच्छा भएमा ०५६-५२२७३२ मा सम्पर्क गर्न आह्वान गर्दछौं।